॥ श्रीः ॥

# चाणक्यनीतिदर्पण :



नेपालीमा भावानुवाद : मोहन प्रसाद सापकोटा

## दुई शब्द

चाणक्य सूत्रपछि चाणक्यको यो दोश्रो लघुग्रन्थ नेपालीमा भावानुवाद गरी पाठक सामु उपलब्ध गराउन सकेँ । चाणक्य नीति र चाणक्य नीति दर्पण नामका अनेक संस्करण र अनेक टीकाकारका ग्रन्थ भेटिन्छन् । एक अर्कामा समानता छैन ।

यो ग्रन्थ अनुवाद गर्ने क्रममा पहिला त नेपाली भाषामा उल्था समेत गरी तेज बहादुर चित्रकारबाट नेपाली कागजमा वि.सं.१९८५ मा लेखिएको हस्तलिखित "बुद्धि चाणक्य नीति दर्पण" नामक ग्रन्थलाई आधार बनाउँकी जस्तो लागेको थियो तर पछि निर्णय बदल्दै त्यसभन्दा अघि वि.सं.१९६१ मा प्रकाशित पं.मेहरचन्द्रशर्माद्वारा सम्पादित हिन्दी टीका सहितको "चाणक्यनीतिदर्पण:" लाई आधार बनाएर यो ग्रन्थ तयार पारिएको हो । सबै संस्करणका सबै श्लोक समावेश गर्न सकिएन । उल्लेखित दुई ग्रन्थका बीचमा पनि धेरै भिन्नता देखिन्छ, त्यो पनि यसमा समाविष्ट छैन ।



सम्भव भएसम्म शुद्ध र सरल बनाउन प्रयाश गरिएको छ तर कतिपय कुरा आफ्नै आँखाले भेट्टाउन नसकिँदो रहेछ । कतिपय विषय आफ्नो क्षमताभन्दा परका पनि पर्दा रहेछन् । यो कमजोरीलाई सहजताका साथ स्वीकार गरिदिनु हुन अनुरोध गर्दछु ।

अल्पज्ञान भएपछि भूमिका पनि धेरै तन्काउन नजानिदो रहेछ । पत्रंपुष्पं जो सकेको अर्पण गरेँ, स्वीकार गर्नु होला ।

मिति : २०७९।१०।२८।०७, नेपाल

विषयसूची



विषयसूची

विषयसूची

# श्रीः
# चाणक्यनीतिदर्पणः
## ॥ अथ प्रथमोऽध्यायः ॥
(पहिलो अध्याय)

### मङ्गलाचरण

**प्रणम्य शिरसा विष्णुं त्रैलोक्याधिपतिं प्रभुम् ।**
**नानाशास्त्रोद्धृतं वक्ष्ये राजनीतिसमुच्चयम् ॥१॥**

तीन वटै लोकका मालिक भगवान् विष्णुलाई शिरले नमस्कार गर्दै अनेक शास्त्रबाट सार खिची निकालिएको यो राजनीतिको "राजनीतिसमुच्चय" नामक सङ्ग्रह-ग्रन्थ बताउँदछु ।

### ग्रन्थको महत्व

**अधीत्येदं यथाशास्त्रं नरो जानाति सत्तमः ।**
**धर्मोपदेशविख्यातं कार्याकार्यं शुभाशुभम् ॥२॥**



जो मानिसहरू यो शास्त्र पढी धर्मशास्त्रले बताएका गर्न हुने र नहुने तथा शुभ र अशुभ कार्यका बारेमा जान्दछन् ती उत्तम मानिस हुनेछन् ।

**तदहं सम्प्रवक्ष्यामि लोकानां हितकाम्यया ।**
**यस्य विज्ञानमात्रेण सर्वज्ञत्त्वं प्रपद्यते ॥३॥**

म लोककल्याणको चाहना गरी यो शास्त्रलाई बताउँदछु । यो शास्त्र जानेर मात्र पनि सबै कुराको ज्ञान पाउन सकिन्छ ।

### मानिस दुःखी हुने कारण

**मूर्खशिष्योपदेशेन दुष्टस्त्रीभरणेन च ।**
**दुःखितैः सम्प्रयोगेण पण्डितोप्यवसीदति ॥४॥**

मूर्ख शिष्यलाई पढाउनाले, दुष्टा स्त्रीलाई पालनपोषण गर्नाले र दुःखी मानिसहरूसँग बढी मेलजोल बढाउनाले बुद्धिमान् व्यक्ति पनि दुःखी हुन पुग्दछ ।

### आयु कम हुने कारण

**दुष्टाभार्या शठंमित्रं भृत्यश्चोत्तरदायकः ।**
**ससर्पे च गृहे वासो मृत्युरेव न संशयः ॥५॥**

दुष्ट स्वभावकी पत्नी, शठ (मूर्ख, बदमास, धूर्त, दुष्ट) साथी, उत्तरदायित्व नभएको सेवक र सर्प भएको घरमा बस्ने कार्यले निश्चय नै मृत्यु हुन्छ ।

### शरीरको रक्षा

**आपदर्थे धनं रक्षेद्दारान्रक्षेद्धनैरपि ।**
**आत्मानं सततं रक्षेद्दारैरपि धनैरपि ॥६॥**

आपद् पर्दा धनलाई रक्षा गर्नू । धन र पत्नीमध्ये कुनै एकलाई मात्र रक्षा गर्न सकिने अवस्था आएमा धनलाई त्यागेर भएपनि पत्नीलाई रक्षा गर्नू । तर धन, पत्नी र आफूमध्ये एकलाई मात्र रक्षा गर्न सकिने अवस्था आए धन र पत्नीलाई त्यागेर भएपनि सधैं आफ्नो रक्षा गर्नू ।



### धनको रक्षा

**आपदर्थे धनं रक्षेच्छ्रीमतश्च किमापदः ।**
**कदाचिच्चलिता लक्ष्मीः सञ्चितापि विनश्यति ॥७॥**

सङ्कटका लागि भनी धनको रक्षा गर्नू । सङ्कट कहिले आउँदछ के भन्न सकिन्छ र ? केही गरी लक्ष्मी गइन् भने जोगाएर राखिएको धन पनि नाश हुन्छ ।

### बस्न अयोग्य देश

**यस्मिन्देशे न सम्मानो न वृत्तिर्न च बान्धवः ।**
**न च विद्यागमोप्यस्ति वासं तत्र न कारयेत् ॥८॥**

जुन देशमा सम्मान छैन, आजीविकाको कुनै उपाय छैन, बन्धुबान्धव छैनन् अनि पढ्ने अवसर पनि छैन त्यो देशमा नबस्नू ।

### बास बस्न नहुने स्थान

**धनिकः श्रोत्रियो राजा नदी वैद्यस्तु पञ्चमः ।**
**पञ्च यत्र न विद्यन्ते न तत्र दिवसं वसेत् ॥९॥**

धनी, वेद-विज्ञ ब्राह्मण, राजा, नदी र वैद्य : यी पाँच कुरा जहाँ हुँदैनन् त्यहाँ एक दिन पनि बास नबस्नू ।

### सङ्गत गर्न अयोग्य स्थान

**लोकयात्रा भयं लज्जा दाक्षिण्यं त्यागशीलता ।**
**पञ्च यत्र न विद्यन्ते न कुर्यात्तत्र संगतिम् ॥१०॥**

जहाँ निर्धक्कसँग ओहोरदोहोर गर्न पाइँदैन वा आजीविकाका साधन हुँदैन, जहाँ अनुचित कार्य गर्न कसैको डर हुँदैन, जहाँ लाजसरम हुँदैन, जहाँ प्रतिभाको कदर हुँदैन र जहाँ धार्मिक भावना हुँदैन त्यहाँ सङ्गत जगर्नू ।



### सेवक, बन्धुजन, मित्र र पत्नीको परीक्षा

**जानीयात्प्रेषणे भृत्यान् बान्धवान् व्यसनागमे ।**
**मित्रञ्चापत्तिकालेषु भार्याञ्च विभवक्षये ॥११॥**

कसैले पठाएको कुनै वस्तु लिँदा वा कसैलाई कुनै वस्तु पठाउँदा सेवकहरूको, असमर्थतामा बन्धुबान्धवहरूको, आपद् पर्दा मित्रको र धनसम्पत्ति नाश हुँदा पत्नीको परीक्षा हुने गर्दछ ।

### वास्तविक आफन्त

**आतुरे व्यसने प्राप्ते दुर्भिक्षे शत्रुसङ्कटे ।**
**राजद्वारे श्मशाने च यस्तिष्ठति स बान्धवः ॥१२॥**

कमजोर हुँदा वा खाँचो पर्दा, असमर्थ हुँदा, अनिकालमा, शत्रुबाट सङ्कट आइलाग्दा, न्यायालयमा र मसानमा जो सँगै रहन्छ वास्तवमा त्यही नै बान्धव वा आफन्त हो ।

### अस्थायी कुरालाई नअँगाल्नू

**यो ध्रुवाणि परित्यज्य अध्रुवं परिसेवते ।**
**ध्रुवाणि तस्य नश्यन्ति अध्रुवं नष्टमेव हि ॥१३॥**

जसले धर्म, ईश्वर आदि जस्ता स्थायी वा निश्चित् कुरालाई छाडी धन, मान आदि जस्ता अस्थायी वा अनिश्चित् कुरालाई अँगाल्दछ उसका अस्थायी कुरा त नाश हुन्छन् नै स्थायी कुरा समेत नाश हुन्छ ।

### विवाहमा कन्या चयन

**वरेयेत्कुलजां प्राज्ञो विरूपामपि कन्यकाम् ।**
**रूपशीलां न नीचस्य विवाहः सदृशे कुले ॥१४॥**

बुद्धिमान्ले रूपहीन भएपनि उत्तम कुलकी कन्यासँग विवाह गर्नू । सुन्दर र शीलवती भएपनि नीचकुलकी कन्यासँग विवाह नगर्नू । विवाह समान कुलमा नै गर्नुपर्दछ ।



### विश्वास गर्न नहुने कुरा

**नखिनां च नदीनां च श्रृङ्गिणां शस्त्रपाणिनाम् ।**
**विश्वासो नैव कर्तव्यः स्त्रीषु राजकुलेषु च ॥१५॥**

लामालामा नङ वा नङ्ग्रा हुनेको, नदी वा खोला आदिको, सिङ हुनेको, हातमा हतियार लिएका व्यक्तिहरूको, स्त्रीको र राजकुलको विश्वास नगर्नू । (राजकूलको अर्थ कुनै टीकाकारले राजनीतिज्ञ, कुनै टीकाकारले राजपरिवार र कुनैले न्यायालय समेत लगाएको पाइन्छ) ।

### अमृत, सुन, ज्ञान र स्त्रीरत्न अशुद्ध हुँदैनन्

**विषादप्यमृतं ग्राह्यममेध्यादपि काञ्चनम् ।**
**नीचादप्युत्तमां विद्यां स्त्रीरत्नं दुष्कुलादपि ॥१६॥**

विषबाट पनि अमृत लिन वा झिक्न हुन्छ । फोहोर वा अपवित्र ठाउँबाट पनि सुन लिन वा झिक्न हुन्छ । नीच व्यक्तिबाट उत्तम विद्या वा ज्ञान लिन हुन्छ । खराब कुलमा जन्मिएकी भएपनि सर्वगुणसम्पन्न उत्तम स्त्रीसँग विवाह गर्न हुन्छ ।

**स्त्रीका गुण**

**स्त्रीणां द्विगुणआहारो लज्जा चापि चतुर्गुणा ।**
**साहसं षड्गुणश्चैव कामश्चाष्टगुणः स्मृत ॥१७॥**

पुरुषको तुलनामा स्त्रीमा आहार अर्थात् खानेकुरा बटुल्ने, पकाइतुल्याइ गर्ने र खाने क्षमता दोब्बर हुन्छ । यसैगरी लाज चौबर, साहस छ गुना र सहवासको चाहना आठ गुना बढी हुन्छ भनी बताइएको छ ।

**॥ इति प्रथमोऽध्यायः ॥**

॥ पहिलो अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

## ॥ अथ द्वितीयोऽध्यायः ॥

(दोश्रो अध्याय)

### स्त्रीका स्वाभाविक गुण

**अनृतं साहसं माया मूर्खत्वमतिलोभिता ।**
**अशौचत्वं निर्दयत्वं स्त्रीणां दोषाः स्वभावजाः ॥१॥**

झूट बोल्नु, अदम्य साहस गर्नु वा सोचविचार नै नगरी हत्त न पत्त कुनै काममा हात हाल्नु, सक्कली वा नक्कली माया गर्नु, मूर्खता, अति लोभ गर्नु, अशुद्ध रहनु र निर्दयी हुनु : यी स्त्रीका स्वाभाविक गुणहरू हुन् ।

### तपस्याको फल

**भोज्यं भोजनशक्तिश्च रतिशक्तिर्वराङ्गना ।**
**विभवो दानशक्तिश्च नाल्पस्य तपसः फलम् ॥२॥**



खानपिन गर्ने कुरा, खानपिन गर्ने शक्ति, सहवास क्षमता, सुन्दर र सुशिला स्त्री, ऐश्वर्य र दान गर्ने शक्ति हुनु भनेको चानचुने वा सानोतिनो तपस्याको फल होइन ।

### पृथ्वी नै स्वर्ग हुने वातावरण

**यस्य पुत्रो वशीभूतो भार्या छन्दानुगामिनी ।**
**विभवे यश्च सन्तुष्टस्तस्य स्वर्ग इहैव हि ॥३॥**

जसको पुत्र आफ्नो वशमा छ, जसकी पत्नी आफ्नो आज्ञा अनुसार हिँडने गर्दछे, जो आफ्नो श्रीसम्पत्तिबाट सन्तुष्ट छ त्यसका लागि स्वर्ग नै यहीँ हुन्छ ।

### वास्तविक पुत्र, पिता, मित्र र पत्नी

**ते पुत्रा ये पितुर्भक्ताः स पिता यस्तु पोषकः ।**
**तन्मित्रं यत्र विश्वासः सा भार्या यत्र निर्वृतिः ॥४॥**

छोरो त्यही हो जो बाउआमाको भक्त छ । पिता त्यही हो जसले पालनपोषण गर्दछ । मित्र त्यही हो जसमाथि विश्वास गर्न सकिन्छ । पत्नी तिनै हुन् जसले पतिको हृदयलाई आनन्दित र शान्त बनाउँदछिन् ।

**त्याज्य मित्र**

**परोक्षे कार्यहन्तारं प्रत्यक्षे प्रियवादिनम् ।**
**वर्जयेत्तादृशं मित्रं विषकुम्भं पयोमुखम् ॥५॥**

सतहमा दूध तर भित्र विषले भरिएको भाँडो जस्तै अगिल्तिर चापलुसी गर्ने तर पछिल्तिर खोइरो खन्ने खालका मित्रलाई परित्याग गर्नू ।

**मित्रमा धेरै विश्वास नगर्नू**

**न विश्वसेत् कुमित्रे च मित्रे चापि न विश्वसेत् ।**
**कदाचित् कुपितं मित्रं सर्वं गुह्यं प्रकाशयेत् ॥६॥**



कुमित्र माथि कहिल्यै विश्वास नगर्नू । सुमित्र माथि पनि धेरै विश्वास नगर्नू । कुनै कारणले मित्र रिसाए उसले आफ्ना सबै गोप्य कुरा प्रकाशित गरिदिनेछ ।

**मनका कुरा नखोल्नू**

**मनसा चिन्तितं कार्यं वाचा नैव प्रकाशयेत् ।**
**मन्त्रेण रक्षयेद् गूढं कार्य्यञ्चापि नियोजयेत् ॥७॥**

मनले सोचेका कुरा मुखले फलाक्दै नहिँड्नू । यस्ता कुरा दृढतापूर्वक गोप्य राख्दै कार्यान्वयन पनि गर्नू ।

**कष्टदायक कुरा**

**कष्टञ्च खलु मूर्खत्वं कष्टञ्च खलु यौवनम् ।**
**कष्टात् कष्टतरं चैव परगेहे निवासनम् ॥८॥**

मूर्खता साँच्चिकै कष्टदायक हुन्छ, जवानी पनि कष्टदायक हुन्छ नै । तर अर्काको घरमा बस्नु चाहीँ महाकष्टदायक हुन्छ ।

### सबै कुरा सबैतिर हुँदैन

**शैले शैले न माणिक्यं मौक्तिकं न गजे गजे ।**
**साधवो न हि सर्वत्र चन्दनं न वने वने ॥९॥**

सबै पर्वतमा माणिक्य हुँदैन, सबै हात्तीमा गजमोति हुँदैन, सबैतिर साधु हुँदैनन् अनि सबै बनमा चन्दन हुँदैन ।

### पुत्रलाई निर्देशन

**पुत्राश्च विविधैः शीलैर्नियोज्याः सततं बुधैः ।**
**नीतिज्ञाः शीलसम्पन्ना भवन्ति कुलपूजिताः ॥१०॥**

विद्वानले छोरा(सन्तान)हरूलाई निरन्तर अनेक किसिमका सदाचारमा लगाउनू । यी नीतिविद् र सदाचारी हुँदा कुलमा नै पूजित हुन्छन् ।



### सन्तानलाई पढाउनू

**मातारिपुः पिताशत्रुर्वालो याभ्यां न पाठ्यते ।**
**सभामध्ये न शोभेत हंसमध्ये बको यथा ॥११॥**

आफ्ना सन्तानलाई नपढाउने आमा शत्रु र बाउ बैरी हुन् । जसरी हाँसका बचिमा बकुल्लो सुहाउँदैन त्यसरी नै विद्याहीन मानिस सभाका बीचमा सुहाउँदैन ।

### सन्तानलाई लाडप्यारभन्दा दण्ड ठिक

**लालनाद् बहवो दोषास्ताडनाद् बहवो गुणाः ।**
**तस्मात्पुत्रञ्च शिष्यञ्च ताडयेन्न तु लालयेत् ॥१२॥**

लाडप्यारमा अनेक विकृति हुन्छन् तर दण्डमा धेरै गुण हुन्छन् । यसैले पुत्र र शिष्यलाई लाडप्यारमा मात्र होइन उचित दण्ड दिँदै हुर्काउनु पर्दछ ।

### अध्ययन एवं दान

**श्लोकेन वा तदर्द्धेन तदर्द्धार्द्धाक्षरेण वा ।**
**अवन्ध्यं दिवसं कुर्याद्दानाध्ययनकर्मभिः ॥१३॥**

एक श्लोक, त्यसको आधा, एक पाउ वा एक अक्षर नै किन नहोस्, सिक्नू । दान र अध्ययन आदिजस्ता असल कर्म नगरी त्यत्तिकै एक दिन पनि खेर नफाल्नू ।

### आयु कम हुने कारण

**कान्तावियोगः स्वजनापमानो रणस्यशेषः कुनृपस्य सेवा ।**
**दरिद्रभावो विषमा सभा च विनाग्निना ते प्रदहन्ति कायम् ॥१४॥**

पत्नीसँगको वियोग, आफन्तले गर्ने अपमान, युद्धमा बचेको शत्रु, दुष्ट राजाको सेवा, गरिबी र असन्तुलित सभा : यिनले आगो बिना नै शरीरलाई जलाउँदछन् ।



### चाँडै नाश हुने वृक्ष, स्त्री र राजा

**नदीतीरे च ये वृक्षाः परगेहेषु कामिनी ।**
**मन्त्रिहीनाश्च राजानः शीघ्रं नशन्त्यसंशयम् ॥१५॥**

नदी किनारमा भएका रूखहरू, अर्काको घरमा रहेकी स्त्री र मन्त्री नभएका राजा निश्चय नै चाँडै नाश हुन्छन् ।

### ब्राह्मण, क्षत्रिय आदिको बल

**बलं विद्या च विप्राणां राज्ञां सैन्यबलन्तथा ।**
**बलं वित्तञ्च वैश्यानां शूद्राणां परिचर्यिका (च कनिष्ठिका) ॥१६॥**

ब्राह्मणहरूको बल भनेको विद्या वा ज्ञान हो । क्षत्रियहरूको बल भनेको सैन्यबल वा वीरता हो । वैश्यहरूको बल भनेको धन हो । शूद्रहरूको बल भनेको सेवा-कर्म हो ।

### त्याज्य राजा, घर आदि

**निर्धनं पुरुषं वेश्या प्रजा भग्नं नृपं त्यजेत् ।**
**खगा वीतफलं वृक्षं भुक्त्वा अभ्यागता गृहम् ॥१७॥**

निर्धन पुरुषलाई वेश्याले छाडेझैं रक्षा गर्न नसक्ने राजालाई प्रजाले छाड्नू । फल नलाग्ने वा फल निखेको रूखलाई चराहरूले छाडेझैं खाना खाइसकेपछिको घरलाई अतिथिले छाड्नू ।

**गृहीत्वा दक्षिणां विप्रास्त्यजन्ति यजमानकम् ।**
**प्राप्तविद्या गुरुं शिष्या दग्धारण्यं मृगास्तथा ॥१८॥**

दक्षिणा लिइ सकेपछि ब्राह्मणहरू जजमानको घर छाड्दछन् । विद्या आर्जन गरिसकेपछि शिष्यहरू गुरुलाई छाड्दछन् । डँडेलो लागेको वनलाई मृग आदि जनावरहरू छोड्दछन् ।

### नष्ट पार्ने मित्रता



**दुराचारीदुष्टदृष्टिर्दुरावासी च दुर्जनः ।**
**यन्मैत्री क्रियते पुंसां स तु शीघ्रं विनश्यति ॥१९॥**

खराब आचरण भएको, खराब कुरामा दृष्टि लगाउने, खराब ठाउँमा बसोबास गर्ने र दुर्जनसँग मित्रता गाँस्ने मानिस चाँडै नष्ट हुन्छ ।

### सुहाउने कुरा

**समाने शोभते प्रीतिः राज्ञि सेवा च शोभते ।**
**वाणिज्यं व्यवहारेषु स्त्री दिव्या शोभते गृहे ॥२०॥**

समानस्तरमा गरिने माया सुहाउँदछ । राजालाई गरिने सेवा पनि सुहाउँदछ । लेनदेनको काम गर्दा ब्यापार सुहाउँदछ । घरभित्र लक्षणकी स्त्री सुहाउँदछे ।

**॥ इति द्वितीयोऽध्यायः ॥**

॥ दोश्रो अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

## ॥ अथ तृतीयोऽध्यायः ॥
(तेश्रो अध्याय)

### सामान्य कुरा

**कस्य दोषः कुले नास्ति व्याधिना के न पीडितः ।
व्यसनं के न सम्प्राप्तं कस्य सौख्यं निरन्तरम् ॥१॥**

कसको कुलमा दोष छैन ?, रोगव्याधीले पीडित नहुने को छ ?, कुनै न कुनै खराब लतमा नलाग्ने को छ ?, अनि कसको सुखमा निरन्तरता छ ?

### मानिस चिन्ने तरिका

**आचारः कुलमाख्याति देशमाख्याति भाषणम् ।
सम्भ्रमः स्नेमाख्याति वपुराख्याति भोजनम् ॥२॥**



कसैको आचरणबाट उ कस्तो कुलको भनी थाहा हुन्छ । उसले बोल्ने भाषाबाट उ कुन देशको वासिन्दा हो भन्ने कुरा थाहा हुन्छ । मानिसको व्यवहारबाट माया थाहा हुन्छ । मानिसको शरीरको बनोटबाट उसले के कस्तो खानपिन गर्दछ भन्ने कुरा थाहा हुन्छ ।

### उचित व्यक्तिलाई उचित कर्ममा लगाउनू

**सत्कुले योजयेत् कन्यां पुत्रं विद्यासु योजयेत् ।
व्यसने योजयेच्छत्रुं मित्रं धर्मे नियोजयेत् ॥३॥**

छोरीलाई राम्रो कुलमा बिहे गरि दिनू । छोरालाई पढाउनू । शत्रुलाई कुलतमा र मित्रलाई धर्मकर्ममा लगाउनू ।

### दुर्जनभन्दा सर्प वेश

**दुर्जनस्य च सर्पस्य वरं सर्पो न दुर्जनः ।
सर्पो दशति काले तु दुर्जनस्तु पदे पदे ॥४॥**

दुर्जन र सर्पमध्ये कुनै एकलाई रोज्नुपर्दा सर्पलाई रोज्नू । किन कि सर्पले त कहिलेकाहीँ मात्र डस्दछ तर दुर्जनले पाइलापाइलामा डस्दछ ।

### कुलीनको महत्व

**एतदर्थं कुलीनानां नृपाः कुर्वन्ति सङ्ग्रहम् ।**
**आदिमध्याऽवसानेषु न त्यजन्ति च ते नृपाम् ॥५॥**

शुरु, बीच र अन्तमा पनि साथ नछोड्ने हुनाले नै राजाहरू कुलीनलाई भाइभारदारका रूपमा बटुल्ने गर्दछन् ।

### सज्जनले कहिल्यै पक्षपात गर्दैन

**प्रलये भिन्नमर्यादा भवन्ति किल सागराः ।**
**सागरा भेदमिच्छन्ति प्रलयेऽपि न साधवः ॥६॥**



प्रलय आउँदा सारा समुद्रको मर्यादा पनि बदलिन्छ, ती आसपास क्षेत्रलाई तहसनहस बनाउने गर्दछन् । यसरी समुद्रमा पनि पक्षपाती स्वभाव देखिन्छ तर सज्जनहरू प्रलयमा पनि पक्षपात गर्दैनन् ।

### मूर्खसँग सचेत रहनू

**मूर्खस्तु परिहर्त्तव्यः प्रत्यक्षो द्विपदः पशुः ।**
**भिनत्ति वाक्यशल्येन अदृशं कण्टकोयथा ॥७॥**

मूर्ख दुई खुट्टे जनावर जस्तै हुन्छन्, त्यसैले तीसँग सतर्क रहनू । ती नदेखिने काँडाले घोचे झैं वचनरूपी काँडाले घोच्ने गर्दछन् ।

### विद्याको महत्व

**रूपयौवनसम्पन्ना विशालकुलसम्भवाः ।**
**विद्याहीना न शोभन्ते निर्गन्धा इवकिंशुका ॥८॥**

रूप र यौवनले सम्पन्न भई असल र ठूलो कुलमा जन्मेका भएपनि पढेका छैनन् भने ती बास्ना नआउने पलाँशको फूलझैं अशोभनीय हुन्छन् ।

### शोभा

**कोकिलानां स्वरो रूपं स्त्रीणां रूपं पतिव्रतम् ।**
**विद्या रूपं कुरुपाणां क्षमा रूपं तपस्विनाम् ॥९॥**

कोइलीको शोभा स्वर, स्त्रीको शोभा पतिव्रता धर्म, कुरुपको शोभा विद्या र तपस्वीको शोभा क्षमा हो ।

### त्याग्ने कुरा

**त्यजेदेकं कुलस्याऽर्थे ग्रामस्याऽर्थे कुलं त्यजेत् ।**
**ग्रामं जनपदस्याऽर्थे आत्माऽर्थे पृथिवीं त्यजेत् ॥१०॥**



कुलका लागि एक जना कुल सदस्यलाई त्याग्नू, गाउँका लागि कुल त्याग्नू, देशका लागि गाउँ त्याग्नू र आत्माका लागि पृथिवी त्याग्नू ।

### गरिबी, पाप, झगडा र डर नहुने कुरा

**उद्योगे नास्ति दारिद्र्यं जपतो नास्ति पातकम् ।**
**मौने च कलहं नास्ति नास्ति जागरिते भयम् ॥११॥**

उद्योगमा गरिबी हुँदैन, जपमा पाप हुँदैन, मौनतामा झगडा हुँदैन अनि जागा हुँदा डर हुँदैन ।

### अती नगर्नू

**अतिरूपेण वै सीता अतिगर्वेणः रावणः ।**
**अतिदानात् बलिर्वद्धो अति सर्वत्र वर्जयेत् ॥१२॥**

अति सुन्दरताले गर्दा सीता हरिइन्, अति अभिमानले गर्दा रावण मारियो, अति दान दिनाले गर्दा बलि बाँधिए, (त्यसैले) सबैतिर अतिलाई परित्याग गर्नू ।

### बोझ, टाढा, विदेश र पराई नहुने अवस्था

**कोहिभारः समर्थानां किं दूरं व्यवसायिनाम् ।**
**को विदेशः सुविद्यानां कोऽप्रियः प्रियवादिनाम् ॥१३॥**

समर्थका लागि के कुरा पो ठूलो बोझ हुन्छ र ? उद्यमीलाई कुन कुरा टाढा छ र ? असल विद्या जानेकालाई कहाँ विदेश हुन्छ र ? मिठो बोली बोल्नेलाई को पो अप्रिय हुन्छ र ?

### असल पुत्र

**एकेनाऽपि सुवृक्षेण पुष्पितेन सुगन्धिना ।**
**वासितं तद्वनं सर्वं सुपुत्रेण कुलं तथा ॥१४॥**

फूल फुलेको एउटै वृक्षले पूरै वनलाई सुगन्धित बनाएझैं (एउटै) असल पुत्रले पूरै कुललाई चम्काउँदछ ।



### खराब पुत्र

**एकेन शुष्कवृक्षेण दह्यमानेन वह्निना ।**
**दह्यते तद्वनं सर्वं कुपुत्रेण कुलं यथा ॥१५॥**

जसरी एउटै सुकेको रूखमा बलिरहेको आगोले पूरै वनलाई डढाउँदछ त्यसरी नै (एउटै) खराब छोराले कुललाई डढाउँदछ ।

### सज्जन पुत्र एउटै भए पुग्दछ

**एकेनापि सुपुत्रेण विद्यायुक्तेन साधुना ।**
**आह्लादितं कुलं सर्वं यथा चन्द्रेण शर्वरी ॥१६॥**

एउटै शिक्षित र सज्जन छोरोले आफ्नो कुललाई चन्द्रमाले रातलाई प्रकाशित पारेझैं प्रकाशित पार्दछ ।

**किं जातैर्बहुभिः पुत्रैः शोकसन्तापकारकैः ।**
**वरमेकः कुलाऽऽलम्बी यत्र विश्राम्यते कुलम् ॥१७॥**

शोक र सन्ताप दिने खालका धेरै छोराहरू भएर के काम ? कुललाई आश्रय दिने एउटै छोरोलाई रोज्नू, जसमा कुल नै विश्राम गर्न सकोस् ।

### सन्तानको पालपोषण

**लालयेत्पञ्चवर्षाणि दशवर्षाणि ताडयेत् ।**
**प्राप्ते तु षोडशे वर्षे पुत्रं मित्रवदाचरेत्॥१८॥**

छोरालाई पाँच वर्षको हुँदासम्म लाडप्यार गर्नू, त्यसपछिका दश वर्षसम्म उसलाई नियन्त्रण गर्नू, सोह्र वर्ष पुगेपछि उसँग साथि जस्तै व्यवहार गर्नू ।

### जोगिनु पर्ने कुरा

**उपसर्गेऽन्यचक्रे च दुर्भिक्षे च भयावहे ।**
**असाधुजनसम्पर्के यः पलायति स जीवति॥१९॥**

महामारी हुँदा, शत्रुले आक्रमण गर्दा, अनिकालमा, सन्त्रासमा र खराब आचरण भएको व्यक्तिसँगको सङ्गतबाट जो भाग्न (जोगिन) सक्दछ त्यही नै बाँच्दछ ।



### निरर्थक जन्म

**धर्मार्थकाममोक्षाणां यस्यै कोऽपि न विद्यते ।**
**अजागलस्तनस्तेव तस्य जन्म निरर्थकम्॥२०॥**

जसको धर्म, धन, सत्कर्म र मोक्ष जस्ता कुनै कुरा प्रति पनि प्रयत्न छैन, बाख्राको घाँटीमा पलाएको थूनकोझैं तिनको जन्म पनि निरर्थक छ ।

### लक्ष्मीको वास हुने योग्य घर

**मूर्खा यत्र न पूज्यन्ते धान्यं यत्र सुसञ्चितम् ।**
**दाम्पत्ये कलहो नास्ति तत्र श्रीः स्वयमागता॥२१॥**

जहाँ मूर्खहरू सम्मानित हुँदैनन्, अनाजको सञ्चय हुन्छ र जोइपोइका बीचमा झगडा हुँदैन, त्यहाँ लक्ष्मी आफैं आउँदछिन् ।

**॥ इति तृतीयोऽध्यायः॥**

॥ तेश्रो अध्यायको नेपाली भावानुवाद पूर्ण भयो॥

## ॥ अथ चतुर्थोऽध्यायः ॥

(चौथो अध्याय)

### गर्भमै निश्चित हुने कुराहरू

**आयुः कर्म च वित्तञ्च विद्या निधनमेव च ।**
**पञ्चैतानि हि सृज्यन्ते गर्भस्थस्यैव देहिनः ॥१॥**

आयु, गर्ने कर्म, कमाउने एवं खर्च गर्ने धन, आर्जन गर्ने विद्या र मृत्युः यी पाँच कुरा जीव गर्भमै हुँदा निश्चित भइसकेको हुन्छ ।

### साधु

**साधुभ्यस्ते निवर्तन्ते पुत्रामित्राणि बान्धवाः ।**
**ये च तैः सह गन्तारस्तद्धर्मात्सुकृतं कुलम् ॥२॥**



छोरा, साथी र बन्धुबान्धव साधुजनसँग विमुख (परपर) हुने गर्दछन् । तर, जो साधुका वचन अनुसार चल्दछन्, तिनको त्यो पुण्यले पूरै कुल कृतकृत्य (आभारी) हुन्छ ।

### सज्जनको सङ्गत

**दर्शनध्यानसंस्पर्शैर्मत्सी कूर्मी च पक्षिणी ।**
**शिशुं पालयते नित्यं तथा सज्जनसङ्गतिः ॥३॥**

माछाले हेरेर, कछुवाले ध्यान गरेर र चराहरूले छोएर आफ्ना बच्चाको नित्य पालनपोषण गरेजस्तै सज्जनको सङ्गतले मानिसको पालनपोषण गर्दछ ।

### बेलैमा धर्मकर्म गर्नू

**यावत्स्वस्थो ह्ययं देहो यावन्मृत्युश्च दूरतः ।**
**तावदात्महितं कुर्यात् प्राणान्ते किं करिष्यति ॥४॥**

जबसम्म शरीर स्वस्थ र मृत्यु पर हुन्छ तबसम्म आत्मकल्याणका उपाय गरिसक्नू । मर्नेबेलामा के नै गर्न सकिन्छ र ?

### विद्याका गुण

**कामधेनुगुणा विद्या ह्यकाले फलदायिनी ।**
**प्रवासे मातृसदृशी विद्या गुप्तं धनं स्मृतम् ।।५।।**

विद्यामा कामधेनु गाईको जस्तै खराब समय (खनखाँचो) मा फल दिने गुण हुन्छ । यो परदेशमा आमासरह रक्षक बन्दछ । यही भएर विद्यालाई गोप्य धन भन्ने गरिन्छ ।

### एउटै गुनिलो पुत्र वेश

**एकोऽपि गुणवान् पुत्रो निर्गुणैश्च शतैर्वरः ।**
**एकश्चन्द्रस्तमो हन्ति न च ताराः सहस्रशः ।।६।।**



सैयौं बेगुनी छोराहरूलाई अँगाल्नुभन्दा एउटै गुणी छोरालाई अँगाल्नू । (किन कि) हजारौं ताराहरूले नभई एउटै चन्द्रमाले अन्धकारलाई नाश गर्दछ ।

### मूर्ख सन्तान

**मूर्खश्चिरायुर्जातोऽपि तस्माज्जातमृतो वरः ।**
**मृतस्तु चाऽल्पदुःखाय यावज्जीवं जडो दहेत् ।।७।।**

लामो समय बाँच्ने मूर्ख सन्तान हुनुभन्दा मरेको जन्मने वा जन्मनासाथ मर्ने सन्तान वेश हुन्छ । मरेको सन्तान जन्मदा वा जन्मनासाथ सन्तान मर्दा एकछिन दुःख हुन्छ तर मूर्ख सन्तानले बाँचुञ्जेल आमाबाबुलाई दुःख दिन्छ ।

### आयु कम हुने कारण

**कुग्रामवासः कुलहीनसेवा कुभोजनं क्रोधमुखी च भार्या ।**
**पुत्रश्च मूर्खो विधवा च कन्या विनाग्निना षट् प्रदहन्ति कायम् ।।८।।**

खराब गाउँमा बास बस्ने काम, खराब कुलमा जन्मिएका व्यक्तिको सेवा, स्वास्थ्यलाई हानी गर्ने खानपिन, रिसाइरहने पत्नी, मूर्ख छोरो र एकल भएकी छोरी : यी छ कुराले आगो बिना नै शरीरलाई जलाइ रहन्छ ।

### कुसन्तान

**किं तया क्रियते धेन्वा या न दोग्ध्री न गुर्विणी ।**
**कोऽर्थः पुत्रेण जातेन यो न विद्वान् न भक्तिमान् ॥९॥**

दूध पनि नदिने अनि गाभिन् पनि नहुने गाईबाट के फाइदा ? त्यसैगरी त्यस्तो पुत्र जन्मेर के फाइदा जो न विद्वान हुन्छ न त धार्मिक वा मातापिताको भक्त नै ?

### सन्ताप र शान्ति

**संसारतापदग्धानां त्रयो विश्रान्तेहेतवः ।**

**अपत्यञ्च कलत्रञ्च सतां सङ्गतिरेव च ॥१०॥**

व्यवहारिक सन्तापबाट जलिरहेका मानिसहरूका लागि शान्ति प्राप्त गर्ने तीन साधन : पुत्र, पत्नी र सज्जनसँगको सङ्गत हुन् ।

### एकपटक मात्र गरिने कुरा

**सकृज्जल्पन्ति राजानः सकृज्जल्पन्ति पण्डिताः ।**
**सकृत्कन्याः प्रदीयन्ते त्रीण्येतानि सकृत् सकृत् ॥११॥**

राजाहरू आदेश एक पटक दिन्छन्, पण्डितजनहरू उपदेश एक पटक दिन्छन्, कन्यादान पनि एकपटक नै गरिन्छ : यी तीन कुरा एक-एक पटक मात्र गरिन्छन् ।

### के के कति जना भएर गर्ने

**एकाकिना तपो द्वाभ्यां पठनं गायनं त्रिभिः ।**

**चतुर्भिर्गमनं क्षेत्रं पञ्चभिर्बहुभी रणम् ॥१२॥**

तपस्या गर्दा एक्लै, पढ्दा दुई जना मिलेर, गीत गाउँदा तीन जना मिलेर, कतै यात्रा गर्दा चार जना मिलेर र युद्ध गर्दा धेरै जना मिलेर गर्नु राम्रो हुन्छ ।

### वास्तविक पत्नी

**सा भार्या या शुचिर्दक्षा सा भार्या या पतिव्रता ।**
**सा भार्या या पतिप्रीता सा भार्या सत्यवादिनो ॥१३॥**

जो सदा पवित्र रहन्छिन्, हरेक घरेलु काममा सिपालु छिन्, पतिव्रता छिन्, पतिलाई माया गर्दछिन् र साँचो बोल्दछिन् उनी नै पत्नी हुन् ।

### के ले के शून्य हुन्छ

**अपुत्रस्य गृहं शून्यं दिशः शुन्यास्त्वबान्धवाः ।**

**मूर्खस्य हृदयं शून्यं सर्वशून्या दरिद्रता ॥१४॥**

पुत्र (वा सन्तान) नहुँदा घर शून्य हुन्छ । बन्धुबान्धव नहुँदा दश वटै दिशा शून्य हुन्छ । मूर्खको हृदय शून्य हुन्छ । दरिद्रको वा दरिद्रतामा सबै थोक शून्य हुन्छ ।

### के गर्दा के कुरा विष समान हुन्छ

**अनभ्यासे विषं शास्त्रमजीर्णे भोजनं विषम् ।**
**दरिद्रस्य विषं गोष्ठी वृद्धस्य तरुणी विषम् ॥१५॥**

व्यवहारिक प्रयोग गरिँदैन वा ज्ञान बाँडिँदैन भने शास्त्र विषसमान हुन्छ । नपच्ने रोग लागेको वेलामा खाना खानु विष खानु समान हुन्छ । दरिद्रका लागि मानिस बोलाएर कुनै कार्यक्रम गर्नु विष खानु जस्तो हुन्छ । वृद्धका लागि तरुनी पत्नी विषसमान हुन्छे ।

त्याज्य कुरा

**त्यजेद्धर्मं दयाहीनं विद्याहीनं गुरुं त्यजेत् ।**
**त्यजेत्क्रोधमुखीं भार्यां निःस्नेहान् बान्धवाँस्त्यजेत् ॥१६॥**

दया नभएको धर्मलाई त्याग्नू । विद्याज्ञान नभएका गुरुलाई त्याग्नू । जतिखेर पनि रिसाइरहने स्वालकी पत्नीलाई त्याग्नू । दयामाया नभएका नातेदारहरूलाई त्याग्नू ।

चाँडै बूढो हुने कुरा

**अध्वा जरा मनुष्याणां वाजिनां बन्धनं जरा ।**
**अमैथुनं जरा स्त्रीणां वस्त्राणामातपं जरा ॥१७॥**

पैदल धेरै हिँड्नाले मानिस चाँडै बूढो हुन्छ । धेरै बाँधिनाले घोडा चाँडै बूढो हुन्छ । सहवासमा संलग्न नहुँदा स्त्रीहरू चाँडै बूढी हुन्छन् । घाममा धेरैबेर सुकाउनाले लुगाहरू थोत्रा हुन्छन् ।



आत्मकल्याण

**कः कालः कानि मित्राणि को देशः कौ व्ययागमौ ।**
**को वाहं का च मे शक्तिरिति चिन्त्यं मुहुर्मुहुः ॥१८॥**

समय के हो ? मित्रहरू भनेका को हुन् ? देश भनेको के वा कुन् हो ? आय-व्यय के हो ? म को हुँ ? मेरो शक्ति के छ ? : यी कुराहरूलाई पटपटक सोचविचार गर्ने गर्नू ।

देवता

**अग्निर्देवो द्विजातीनां मुनीनां हृदि दैवतम् ।**
**प्रतिमा त्वल्पबुद्धीनां सर्वत्र समदर्शिनाम् ॥१९॥**

द्विज अर्थात् ब्राह्मण, क्षत्रिय र वैश्यका देवता अग्नि हुन् । मुनिजनका हृदयमै सबै देवता बसेका हुन्छन् । कम बुद्धि हुने मानिसका लागि मूर्तिमा देवता हुन्छन् । समदर्शीलाई सबैतिर नै देवता हुन्छन् ।

व्याख्या : विद्याविनयसम्पन्ने ब्राह्मणे गवि हस्तिनि । शुनि चैव श्वपाके च पण्डिताः समदर्शिनः ॥-( श्रीमद्भगवद्गीता) । अध्यात्मविद्या र विनय भएको सात्त्विक ब्राह्मण, राजसी प्रकृतिकी गाई, तामसी प्रकृतिको हात्ती, कुकुर र चाण्डालमा ईश्वरत्व देख्ने मानिसलाई समदर्शी भनिन्छ । सामान्य अर्थमा सबैलाई एक समान देख्ने वा सम्झने व्यक्तिलाई समदर्शी भनिन्छ ।

**॥ इति चतुर्थोऽध्यायः ॥**

॥ चौथो अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

## ॥ अथ पञ्चमोऽध्यायः ॥
## (पाँचौं अध्याय)

### गुरु

**पतिरेव गुरुः स्त्रीणां सर्वस्याभ्यागतो गुरुः ।**
**गुरुरग्निर्द्विजातीनां वर्णानां ब्राह्मणो गुरुः ॥१॥**

स्त्रीका गुरु पति हुन् । सबैका गुरु अतिथि हुन् । द्विजातिका गुरु अग्नि हुन् । सबै वर्णका गुरु ब्राह्मण हुन् ।

### मानिसको परीक्षण

**यथा चतुर्भिः कनकं परीक्ष्यते निघर्षणच्छेदनतापताडनैः ।**
**तथा चतुर्भिः पुरुषः परीक्ष्यते त्यागेन शीलेन गुणेन कर्मणा ॥२॥**



सुनलाई घोटेर, काटेर, तताएर र पिटेर परीक्षण गरिए जस्तै मानिसलाई त्याग, स्वभाव, गुण र आचरणबाट परीक्षण गरिन्छ ।

### भयसँगको मुकाबिला

**तावद्भयेषु भेतव्यं यावद्भयमनागतम् ।**
**आगतं तु भयं दृष्ट्वा प्रहर्तव्यमशङ्कया ॥३॥**

टाढा हुँदासम्म भयसँग डराउनू । तर जब त्यो आफ्नै थाप्लामा आइ लाग्दछ तब दश थरी शङ्का नगरी अर्थात् नहडबडाई त्यो भयसँग जुध्नू ।

### समानता

**एकोदरसमुद्भूता एकनक्षत्रजातकाः ।**
**न भवन्ति समाः शीला यथा बदरकण्टकाः ॥४॥**

बयरको एउटै हाँगामा हुने फल वा काँडामा समानता नभए जस्तै एउटै कोखबाट एउटै नक्षत्रमा जन्मिएका मानिसहरूका बीचमा पनि समानता हुँदैन ।

### स्पष्ट कुरा गर्नेले ठग्दैन

**निःस्पृहो नाऽधिकारी स्यान्नाकामी मण्डनप्रियः ।**
**नाऽविदग्धः प्रियं ब्रूयात् स्पष्टवक्ता न वञ्चकः ॥५॥**

विरक्त वा कामना नहुने व्यक्ति अधिकारी हुँदैन अर्थात् कुनै पद सम्हाल्न चाहँदैन । वासना नहुने व्यक्तिमा श्रृङ्गारपटार गर्ने चाहना हुँदैन । मूर्ख व्यक्तिले मिठो बोल्दैन । स्पष्ट कुरा गर्ने मानिस ठग हुँदैन ।

### इर्ष्याका पात्र

**मूर्खाणां पण्डिता द्वेष्या अधनानां महाधनाः ।**
**दुर्भगाणां च सुभगाः कुलटानां कुलाङ्गनाः ॥६॥**

पण्डित मूर्खका लागि, धनी निर्धनका लागि, शौभाग्यवती स्त्री एकलमहिलाका लागि र कुलीन स्त्री वेश्याका लागि इर्ष्याका पात्र हुन्छन् ।

### नष्ट हुने कुरा

**आलस्योपहता विद्या परहस्तगतं धनम् ।**
**अल्पबीजं हतं क्षेत्रं हतं सैन्यमनायकम् ॥७॥**

अल्छीले पढेको विद्या, परपुरुषको संसर्गमा पुगेकी वा पल्किएकी स्त्री, थोरै बीउ छरिएको खेत र सेनापति नभएको सेना नष्ट हुन्छ ।

### के कुरा के बाट थाहा हुन्छ ?

**अभ्यासाद्धार्यते विद्या कुलं शीलेन धार्यते ।**
**गुणेन ज्ञायते त्वार्यः कोपो नेत्रेण गम्यते ॥८॥**

अभ्यास गर्नाले विद्या र असल आचरण गर्नाले कुल जोगिन्छ । श्रेष्ठ आर्य गुणबाट र रिस आँखाबाट थाहा हुन्छ ।

### के कुरा के ले जोगिन्छ ?

**वित्तेन रक्ष्यते धर्मो विद्या योगेन रक्ष्यते ।**
**मृदुना रक्ष्यते भूपः सत्स्त्रिया रक्ष्यते गृहम् ॥९॥**

धर्म धनले, विद्या अभ्यासले, राजा नम्रताले र घर असल स्वभाव भएका स्त्रीहरूबाट जोगिन्छ ।



### बेकारका दुःखी हुने मानिस

**अन्यथा वेदपाण्डित्यं शास्त्रमाचारमन्यथा ।**
**अन्यथा यद्वञ्छान्तं लोकाः क्लिश्यन्ति चाऽन्यथा ॥१०॥**

वेद जान्ने पण्डितलाई निन्दा गर्ने वा वेदज्ञानलाई अनावश्यक किसिमले प्रचार गर्ने, शास्त्रले बताएका आचरणलाई व्यर्थका कुरा भन्ने र शान्त पुरुषलाई ढोँगी आदि आरोप लगाउने व्यक्तिले बेकारमा दुःख मात्र पाउँदछ ।

### के ले के नाश गर्दछ ?

**दारिद्र्यनाशनं दान शीलं दुर्गतिनाशनम् ।**
**अज्ञाननाशिनी प्रज्ञा भावना भयनाशिनी ॥११॥**

दानले दरिद्रता, असल स्वभावले कष्ट, वुद्धिले अज्ञानता र ध्यान वा सावधानीले भयलाई नाश गर्दछ ।

### अतुलनीय सुख आदि

**नास्ति कामसमो व्याधिर्नास्ति मोहसमो रिपुः ।**
**नास्ति कोपसमो वह्निर्नास्ति ज्ञानात्परं सुखम् ॥१२॥**

काम वा भोग वा चाहना समानको रोग, मोह समानको शत्रु, क्रोध समानको अग्नि र ज्ञान समानको सुख अरु कुनै छैन ।

### सबै कुरा एक्लै भोग्नु पर्दछ

**जन्ममृत्युं हि यात्येको भुनक्त्येकः शुभाशुभम् ।**
**नरकेषु पतत्येक एको याति पराङ्गतिम् ॥१३॥**

मानिस एक्लै जन्म-मरणको चक्रमा फँस्दछ, पाप-पुण्यको फल एक्लै भोग्दछ, नरकमा पनि एक्लै नै पर्दछ र मोक्ष पनि एक्लैले पाउँदछ ।



### घाँसपात सरहका कुरा

**तृणं ब्रह्मविदः स्वर्गस्तृणं शूरस्य जीवितम् ।**
**जिताक्षस्य तृणं नारी निःस्पृहस्य तृणं जगत् ॥१४॥**

वेदको वा ब्रह्माको रहस्य जान्ने विद्वानलाई स्वर्ग, शूरवीरका लागि जीवन, इन्द्रियलाई नियन्त्रण गर्नेका लागि स्त्री तथा वैरागीका लागि संसार घाँसपात सरह हुन्छ ।

### मृत्युपछिको मित्र

**विद्या मित्रं प्रवासेषु भार्या मित्रं गृहेषु च ।**
**व्यधितस्यौषधं मित्रं धर्मो मित्रं मृतस्य च ॥१५॥**

परदेशमा हुँदा विद्या, घरमा हुँदा पत्नी, रोगी हुँदा ओखती र मृत्युपछि धर्म नै मित्र हुन्छन् ।

### व्यर्थ हुने कुरा

**वृथा वृष्टिः समुद्रेषु वृथा तृप्तेषु भोजनम् ।**
**वृथा दानं धनाढ्येषु वृथा दीपो दीवाऽपि च ॥१६॥**

समुद्रमा परेको पानी व्यर्थ हुन्छ । अघाएका व्यक्तिलाई खाना खान दिनु व्यर्थ हुन्छ । धनीलाई दान दिनु व्यर्थ हुन्छ । उज्यालो आदिका लागि दिउस बत्ती बाल्नु पनि व्यर्थ हुन्छ ।

### तुलना

**नाऽस्ति मेघसमं तोयं नाऽस्ति चात्मसमं बलम् ।**
**नाऽस्ति चक्षुः समं तेजो नाऽस्ति धान्यसमं प्रियम् ॥१७॥**

वर्षात्को पानी जस्तो पानी, आत्मबल समानको बल, आँखा समानको तेज र अनाज समान प्रिय वस्तु अरु छैन, हुँदैन ।

### चाहना



**अधना धनमिच्छन्ति वाचश्चैव चतुष्पदः ।**
**मानवाः स्वर्गमिच्छन्ति मोक्षमिच्छन्ति देवताः ॥१८॥**

धन नहुनेलाई यति धन पाए हुन्थ्यो जस्तो लाग्दछ । चौपाया जनावरलाई हामीले पनि मानिसले जसरी बोल्न सके हुन्थ्यो जस्तो लाग्दछ । मानिसको जातलाई स्वर्ग जाने चाहना हुन्छ भने त्यही स्वर्गमा भएका देवताहरूलाई भने मोक्ष हुन पाए हुन्थ्यो भन्ने चाहना हुन्छ ।

### सत्य

**सत्येन धार्यते पृथ्वी सत्येन तपते रविः ।**
**सत्येन वाति वायुश्च सर्वं सत्ये प्रतिष्ठितम् ॥१९॥**

पृथ्वी सत्यमा वा सत्यले अडिएको हुन्छ । सूर्य सत्यले गर्दा नै प्रकाशित हुने गर्दछन् । सत्यको बलले नै हावा बहने गर्दछ । सबै कुरा सत्यमा नै टिकेका हुन्छन् ।

**अस्थिर र स्थिर कुरा**

**चला लक्ष्मीश्चला: प्राणश्चले जीवितमन्दिरे ।**
**चलाऽचले च संसारे धर्म एको हि निश्चल: ॥२०॥**

लक्ष्मी (धन) अस्थिर छिन्, प्राण अस्थिर छ, जीवन र यौवन पनि अस्थिर छ । संसारमा धर्म एक थोक मात्र स्थिर छ ।

बाठा कुरा

**नराणां नापितो धूर्त: पक्षिणां चैव वायस: ।**
**चतुष्पदां श्रृगालस्तु स्त्रीणां धुर्ता च मालिनी ॥२१॥**

मानिसहरूमा नाइ (कपाल काट्ने), चराहरूमा काग, चौपाया पशुमा स्याल र स्त्रीहरूमा माली जातकी स्त्री बाठा हुन्छन् ।

पिता

**जनिता चोपनेता च यस्तु विद्यां प्रयच्छति ।**
**अन्नदाता भयत्राता पञ्चैते पितर: स्मृता: ॥२२॥**

जन्मदाता पिता, व्रतबन्ध गराउने आचार्य, विद्यादान गराउने गुरु, अन्नदान दिने व्यक्ति र डर हटाइदिने व्यक्ति : यी पाँच जनालाई पिता भनिएको छ ।

माता

**राजपत्नी गुरो: पत्नी मित्रपत्नी तथैव च ।**
**पत्नी-माता स्वमाता च पञ्चैता मातर: स्मृता: ॥२३॥**

राजाकी पत्नी, गुरुकी पत्नी, मित्रकी पत्नी तथा सासु र आमा : यी पाँचलाई माता भनिएको छ ।

**॥ इति पञ्चमोऽध्याय: ॥**
॥ पाँचौं अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

## ॥ अथ षष्ठोऽध्यायः ॥

(छैटौं अध्याय)

### सुनेर सिकिने कुरा

**श्रुत्वा धर्मं विजानाति श्रुत्वा त्यजति दुर्मतिम् ।**
**श्रुत्वा ज्ञानमवाप्नोति श्रुत्वा मोक्षमवाप्नुयात् ॥१॥**

धर्मको जानकारी सुनेर लिन्छ । सुनेर नै खराब बुद्धिलाई त्याग्दछ । ज्ञान सुनेर लिन्छ र मोक्ष पनि सुनेर नै प्राप्त गर्दछ ।

### नीच

**काकः पक्षिषु चाण्डालः पशूनाञ्चैव कुक्कुरः ।**
**पापो मुनीनां चाण्डालः सर्वेषां चैव निन्दकः ॥२॥**



चराहरूमा काग र जनावरहरूमा कुकुर नीच हुन्छ । मुनिजनमा पापी वा रिसाहा मुनि नीच हुन्छ भने अरुको निन्दा गर्ने व्यक्ति सबभन्दा नीच हुन्छ ।

### शुद्धता

**भस्मना शुध्यते कांस्यं ताम्रमम्लेन शुध्यति ।**
**रजसा शुध्यते नारि नदी वेगेन शुध्यति ॥३॥**

काँसका भाँडाकुँडा खरानीले माझ्दा शुद्ध हुन्छ । तामाका भाँडाकुँडा अमिलोले माझ्दा शुद्ध हुन्छ । नारि रजस्वलाले शुद्ध हुन्छे । नदी बहाव वा वेगले शुद्ध हुन्छ ।

### पूजिने अवस्था

**भ्रमन् सम्पूज्यते राजा भ्रमन् सम्पूज्यते द्विजः ।**
**भ्रमन् सम्पूज्यते योगी स्त्री भ्रमन्ती विनश्यति ॥४॥**

घुमिरहने गर्दा राजा पूजिन्छन् । घुमिरहनाले ब्राह्मण पूजिन्छ । घुमिरहने गर्दा सन्यासी पूजिन्छ तर घुमिरहनाले स्त्री भने नासिन्छे ।

धन

**यस्यार्थास्तस्य मित्राणि यस्यर्थास्तस्य बान्धवाः ।**
**यस्यार्थाः स पुमाँल्लोके यस्यार्थाः स च पण्डितः ॥५॥**

धनी जो छ उसैका साथीहरू हुन्छन्, उसैका नातागोता पनि हुन्छन् । धनीलाई नै लोकमा मर्द भनिने गर्दछ र जोसँग टन्न पैसा छ त्यही पण्डित पनि हुन्छ ।

दैव

**तादृशी जायते बुद्धिर्व्यवसायोऽपि तादृशः ।**
**सहायास्तादृशा एव यादृशी भवितव्यता ॥६॥**



जस्तो भविष्यमा हुन लेखिएको छ (ईश्वरको इच्छा छ), बुद्धि पनि त्यतैतिर डोरिन थाल्दछ, उ व्यवसाय पनि त्यस्तै किसिमका गर्न थाल्दछ अनि उसका सहयोगी पनि त्यस्तै त्यस्तै भेटिन थाल्दछन् ।

काल

**काल पचति भूतानि कालः संहरते प्रजाः ।**
**कालः सुप्तेषु जागर्ति कालो हि दुरतिक्रमः ॥७॥**

काल (समय) ले नै सबै जीवलाई निपुण बनाउँदछ (पाल्दछ), उसैले सबैको नाश पनि गर्दछ । उ अरु सबै निदाउँदा पनि जागै हुन्छ । उसलाई कसैले जित्न सक्दैन ।

अन्धोपन

**नैव पश्यति जन्माधः कामान्धो नैव पश्यति ।**

**मदोन्मत्ता न पश्यन्ति अर्थी दोषं न पश्यति ॥८॥**

जन्मान्धले आँखा देख्दैन त्यसैगरी वासनामा अन्धो हुनेले पनि आँखा देख्दैन । अहङ्कारीहरू आँखा देख्दैनन् । धनमा डुब्नेले (आफूले गरेको कार्यमा) दोष देख्दैन ।

**स्वयं भोग्ने कुरा**

**स्वयं कर्म करोत्यात्मा स्वयं तत्फलमश्नुते ।**
**स्वयं भ्रमति संसारे स्वयं तस्माद्विमुच्यते ॥९॥**

जीव स्वयं कर्म गर्दछ, त्यसको फल उ स्वयं भोग्दछ, स्वयं विभिन्न योनिमा जन्म लिन्छ र स्ययं ( पुरुषार्थ गरेर) त्यसबाट मोक्ष हुन्छ ।

**पाप**

**राजा राष्ट्रकृतं पापं राज्ञः पापं पुरोहितः ।**

**भर्ता च स्त्रीकृतं पापं शिष्यपापं गुरुस्तथा ॥१०॥**

राजालाई उसका प्रजाले गरेको पाप लाग्दछ । राजपुरोहितलाई राजाले गरेको पाप लाग्दछ । पतिलाई पत्नीले गरेको पाप लाग्दछ । गुरुलाई उनका शिष्यले गरेको पाप लाग्दछ ।

**शत्रु**

**ऋणकर्ता पिता शत्रुर्माता च व्यभिचारिणी ।**
**भार्या रूपवती शत्रुः पुत्रः शत्रुरपण्डितः ॥११॥**

ऋणलिने पिता शत्रु हुन्छ । खराब आचरण भएकी माता शत्रु हुन्छे । सुन्दर पत्नी शत्रु हुन्छे । नपढेको (वा मूर्ख) पुत्र शत्रु हुन्छ ।

**खुशी पार्ने कुरा**

**लुब्धमर्थेन गृह्णीयात् स्तब्धमञ्जलिकर्मणा ।**

**मूर्खं छन्दाऽनुवृत्त्या च यथार्थत्वेन पण्डितम् ॥१२॥**

लोभीलाई धनले, कठोरलाई हात जोडेर, मूर्खलाई सन्मानले र विद्वानलाई साँचो कुरा बताएर खुशी पार्नू ।

भएको भन्दा नभएको वेश

**वरं न राज्यं न कुराजराज्यं वरं न मित्रं न कुमित्रमित्रम् ।**
**वरं न शिष्यो न कुशिष्यशिष्यो वरं न दारा न कुदारदाराः ॥१३॥**

कुस्थान र अधिकार विहीन राजा हुनुभन्दा राजा नै नहुनु वेश । खराब मित्र हुनुभन्दा मित्र नै नहुनु वेश । मूर्ख शिष्यको गुरु हुनभन्दा शिष्य नै नभएको वेश । खराब पत्नी हुनुभन्दा पत्नी नै नभएको वेश ।

कुराज्य



**कुराजराज्येन कुतः प्रजासुखं कुमित्रमित्रेण कुतोऽभिनिर्वृतिः ।**
**कुदारदारैश्च कुतो गृहे रतिः कुशिष्यमध्यापयतः कुतो यशः ॥१४॥**

कुराज्यमा प्रजा कसरी सुखी हुनु ? खराब मित्रबाट कसरी शान्ति पाउनु ? खराब पत्नीबाट घरमा कसरी आनन्द हुन्छ ? नालायक शिष्यलाई पढाएर कसरी यश फैलन्छ ।

शिक्षा

**सिंहादेकं वकादेकं शिक्षेच्चत्वारि कुक्कुटात् ।**
**वायसात्पञ्च शिक्षेच्च षट्शुनस्त्रीणिगर्दभात् ॥१५॥**

सिँहसँग एक, बकुल्लोसँग एक, कुखुरोसँग चार, कागसँग पाँच र गधासँग तीन किसिमका शिक्षालिनू ।

**सिँहबाट लिने शिक्षा**

**प्रभूतं कार्यमपि वा तन्नरः कर्तुमिच्छति ।**
**सर्वारम्भेण तत्कार्यं सिंहादेकं प्रचक्षते॥१६॥**

चाहे थोरै नै किन नहोस्, गर्न मन लागेको कामशुरुदेखि नै दत्तचित्त भएर पूरै शक्ति लगाएर गर्नुपर्दछ भन्ने कुराको शिक्षा सिँहबाट लिनू ।

**बकुल्लोसँग लिने शिक्षा**

**इन्द्रियाणि च संयम्य वकवत् पण्डितो नरः ।**
**देशकालबलं ज्ञात्वा सर्वकार्याणि साधयेत्॥१७॥**

बुद्धिमानले "आफ्ना इन्द्रियलाई नियन्त्रणमा राखी स्थान, समय र योग्यतालाई ध्यान दिँदै लक्ष पूरा गर्नुपर्दछ" भन्ने कुराको शिक्षा बकुल्लोसँग लिनू ।



**कुखुरोबाट लिने शिक्षा**

**प्रत्युत्थानञ्च युद्धञ्च संविभागञ्च बन्धुषु ।**
**स्वयमाक्रम्यभुक्तञ्चशिक्षेच्चत्वारिकुक्कुटात्॥१८॥**

"ठिक समयमा उठनु, नडराइकन लड्नु, सम्पत्ति आफ्ना नातेदारलाई यथोचित भाग लगाउनु र आफ्नै दुःखले खोजेर खाने मेलोमेसो मिलाउनु" : यी चार कुराको शिक्षा कुखुरोबाट लिनू ।

**कागबाट लिने शिक्षा**

**गूढमैथुनचारित्वं काले काले च सङ्ग्रहम् ।**
**अप्रमत्तमविश्वासं पञ्च शिक्षेच्च वायसात्॥१९॥**

"गोप्यरूपमा यौनसम्पर्क गर्नु, नडराउनु, काम लाग्ने वस्तुको जोहो गर्नु, चारैतिर ध्यान दिनु र अरुलाई सजिलै विश्वास नगर्नु" : यी पाँच कुराको शिक्षा कागबाट लिनू ।

### कुकुरबाट लिने शिक्षा

**बह्वाशी स्वल्पसन्तुष्टः सनिद्रो लघुचेतनः ।**
**स्वामिभक्तश्च शूरश्च षडेतो श्वानतोगुणाः ॥२०॥**

"धेरै खान पाउँदा पनि सन्तुष्ट हुनु, थोरै खान पाउँदा पनि सन्तुष्ट हुनु, मस्त निदाउनु, मस्त निदाए पनि अल्छी नगरी झटपट हुठ्नु, मालिकप्रति बफादार रहनु र शूरो हुनु" : यी छ कुराको शिक्षा कुकुरबाट लिनू ।

### गधासँग लिने शिक्षा

**सुश्रान्तोऽपि वहेत् भारं शीतोष्णं न च पश्यति ।**
**सन्तुष्टश्चरते नित्यं त्रीणि शिक्षेच्च गर्दभात् ॥२१॥**

"थाके पनि आफ्नो जिम्मेवारी नछाड्नु, जाडोगर्मीको मतलब नगर्नु र सधैँ सन्तुष्ट हुनु" : यी तीन कुराको शिक्षा गधासँग लिनू ।



**य एतान् विंशतिगुणानाचरिष्यति मानवः ।**
**कार्यावस्थासु सर्वासु अजेयः स भविष्यति ॥२२॥**

जो मानिसले यी बीस गुणको अनुशरण गर्दछ उ सबै प्रकारका कार्यमा सफल हुन्छ ।

**॥ इति षष्ठोऽध्यायः ॥**

॥ छैटौं अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

# ॥ अथ सप्तमोऽध्यायः ॥
## (सातौँ अध्याय)

### बताउँदै हिँड्न नहुने कुराहरू

**अर्थनाशं मनस्तापं गृहिणी दुश्चरितानि च ।**
**नीचवाक्यंचापमानं मतिमान् न प्रकाशयेत् ॥१॥**

बुद्धिमानले धनसम्पत्ति नासिएको, मनमा पीर परेको, पत्नी चरित्रहीन भएको, नीचका कुरा र अपमानित भएको कुरा फलाक्दै नहिँड्नू ।

### लाज

**धनधान्यप्रयोगेषु विद्यासङ्ग्रहणेषु च ।**
**आहारे व्यवहारे च त्यक्तलज्जः सुखीभवेत् ॥२॥**



आर्थिक व्यवहार (धन, अनाज आदिको लेनदेन) गर्न, विद्या आर्जन गर्न, खान र व्यवहार ( कामधन्दा) गर्न जसले लाज मान्दैन त्यही सुखी हुन्छ ।

### सन्तोष

**सन्तोषाऽमृत तृप्तानां यत्सुखं शान्तचेतसाम् ।**
**न च तद्धनलुब्धानामितश्चेतश्च धावताम् ॥३॥**

सन्तोषरूपी अमृत पिएर अघाउने अनि शान्त चित्त हुनेलाई जुन सुख हुन्छ त्यो सुख धनको लोभमा यता र उता भौंतारिनेहरूलाई हुँदैन ।

**सन्तोषस्त्रिषु कर्तव्यः स्वदारे भोजने धने ।**
**त्रिषु चैव न कर्त्तव्योऽध्ययने जपदानयोः ॥४॥**

आफ्नी पत्नी, आफ्नै घरको खाना र आफ्नो धन गरी तीन कुरामा सन्तोष लिनू । अध्ययन, तपस्या र दान दिनमा सन्तोष नलिनू ।

### बीचबाट हिँड्न नहुने

**विप्रयोः विप्रवह्न्योश्च दम्पत्योः स्वामिभृत्ययोः ।**
**अन्तरेण न गन्तव्यं हलस्य वृषभस्य च ॥५॥**

दुई ब्राह्मण, ब्राह्मण र (यज्ञको) अग्नि, पति र पत्नी, मालिक र नोकर तथा हलो र गोरुका बीचबाट कहिल्यै नहिँड्नू ।

### गोडाले छुन नहुने

**पादाभ्यां न स्पृशेदग्निं गुरुं ब्राह्मणमेव च ।**
**नैव गां च कुमारीन न वृद्धं न शिशुं तथा ॥६॥**



आगो, गुरु, ब्राह्मण, गाई, कन्याकेटी, वृद्धजन र बालवालिकालाई कहिल्यै गोडाले नछुनू ।

### पर बस्ने काम

**शकटं पञ्चहस्तेन शतहस्तेन वाजिनम् ।**
**हस्ती शतहस्तेन देशत्यागेन दुर्जनम् ॥७॥**

गोरुगाडाभन्दा पाँच हात, घोडाभन्दा दश हात, हात्तीभन्दा सय हात र दुर्जन भए त्यस्तो स्थानबाट नै पर बस्नू ।

### वशमा पार्ने वा खुशी पार्ने उपाय

**हस्तीह्यङ्कुशमात्रेण बाजी हस्तेन ताड्यते ।**
**श्रृङ्गी लकुडहस्तेन खड्गहस्तेन दुर्जनः ॥८॥**

हात्ती अङ्कुश लिएको हातले, घोडा हातेले, सिङ हुने जनावर लौरो लिएको हातले तथा दुर्जन तरबार लिएको हातले तह लाग्दछन् ।

**तुष्यन्ति भोजने विप्रा मयूरा घनगर्जिते ।**
**साधवः परसम्पत्तौ खलाः परविपत्तिषु ॥९॥**

ब्राह्मण भोजनले, मुजुर बादलको गर्जनले, साधुसज्जन अरुको सम्पन्नताले र दुर्जन अरुको आपदविपदले सन्तुष्ट हुन्छन् ।

**अनुलोमेन बलिनं प्रतिलोमेन दुर्जनम् ।**
**आत्मतुल्यंबलं शत्रुः विनयेन बलेन वा ॥१०॥**

आफूभन्दा शक्तिशालीसँग उसको कुरा मानेर, दुष्टसँग प्रतिकार गरेर, आफूसमान शक्तिशालीसँग नम्र भएर वा बल प्रयोग गरेर सम्झौता गर्नू ।

### शक्तिको आधार



**बाहुवीर्य बलं राज्ञां ब्रह्मणो ब्रह्मविद्बली ।**
**रूपयौवनमाधुर्यं स्त्रीणां बलमनुत्तमम् ॥११॥**

राजा (क्षत्रिय) को शक्ति बाहुबलमा, ब्राह्मणको शक्ति ब्रह्मज्ञानमा तथा स्त्रीको शक्ति रूप, यौवन र मिठो वचनमा हुन्छ ।

### सोझोपन

**नाऽत्यन्तं सरलैर्भाव्यं गत्वा पश्य वनस्थलीम् ।**
**छिद्यन्ते सरलास्तत्र कुब्जास्तिष्ठन्ति पादपाः ॥१२॥**

धेरै सरल र सोझो व्यवहार गर्ने नहुनू । बनमा गएर हेर त, त्यहाँ सोझा रूखजति काटिएका र बाङ्गा रूखजति बाँकी राखिएका हुन्छन् ।

### सुख र दुःख

**यत्रोदकं तत्र वसन्ति हंसास्तथैव शुष्कं परिवर्जयन्ति ।**
**न हंसतुल्येन नरेण भाव्यं पुनस्त्यजन्तः पुनराश्रयन्तः ॥१३॥**

जहाँ पानी हुन्छ हाँस त्यहीँ बस्दछ । जब पानी सुक्दछ तब उसले त्यो ठाउँ छाडिदिन्छ । तर मानिसले हाँसको जस्तो व्यवहार नगर्नू । सुखदुःख भनेका यस्तै हुन् ती कहिले घुस्दछन् कहिले छाड्दछन् ।

### धनत्याग

**उपार्जितानां वित्तानां त्याग एव हि रक्षणम् ।**
**तडागोदरसंस्थानां परीवाह इवाम्भसाम् ॥१४॥**

जसरी पुरानो पानी बहन दिए मात्र मूलबाट आएको ताजा पानी तलाउमा रहन पाउँदछ त्यसरी नै सञ्चय गरिएको धन त्याग (खर्च) गर्नाले नै धन पुनः आगमन भई रक्षा हुने गर्दछ ।



### धनको महत्व

**यस्यार्थस्तस्य मित्राणि यस्यार्थस्तस्य बान्धवाः ।**
**यस्यार्थः स पुमाँल्लोके यस्यार्थः स च जीवति ॥१५॥**

जोसँग धन छ उसैका मित्रहरू हुन्छन्, जोसँग धन छ उसैका बन्धुबान्धव हुन्छन्, जोसँग धन छ उसैलाई लोकले मर्द भन्ने गर्दछ र जोसँग धन छ त्यही नै बाँचेको हुन्छ (ठानिन्छ) ।

### स्वर्गबाट आई जन्मने मानिस

**स्वर्गस्थितानामिह जीवलोके चत्वारि चिह्नानि वसन्ति देहे ।**
**दानप्रसङ्गो मधुरा च वाणी देवार्चनं ब्राह्मणतर्पणं च ॥१६॥**

स्वर्ग पुगेर जन्मनेहरूका परोपकारमा लाग्ने मन, मीठो बोलिवचन, देवताको आराधना र ब्राह्मण सेवाको आदत गरी चार वटा चिह्न शरीरमा बस्दछन् ।

## नरकबाट आई जन्मने मानिस

**अत्यन्तकोपः कटुता च वाणी दरिद्रता च स्वजनेषु वैरम् ।**
**नीचप्रसङ्गः कुलहीनसेवा चिह्नानि देहे नरकस्थितानाम् ॥१७॥**

नरक पुगेर जन्मनेहरूमा धेरै रिसाउने, दुच्छर मुख, गरिबी र आफन्तसँग वैरभाव, नीचसँग सङ्गत र कुलहीनको सेवा गर्ने जस्ता लक्षण हुन्छन् ।

## साहसिक कार्य

**गम्यते यदि मृगेन्द्रमन्दिरं लभ्यते करिकपीलमौक्तिकम् ।**
**जम्बुकालयगते च लभ्यते वत्सपुच्छ खरचर्मखण्डनम् ॥१८॥**

सिँहको गुफामा गए गजमणि पाउन सकिन्छ तर स्यालको खोरमा गए बाच्छाका पुच्छर र गधाका छालाका टुक्रा बाहेक केही भेटिँदैन । (जति साहसिक काम गर्न सक्यो त्यति ठूलो उपलब्धी हात लाग्दछ) ।



## शिक्षा

**शुनः पुच्छमिच व्यर्थ जीवितं विद्यया विना ।**
**न गुह्यगोपने शक्तं न च दंशनिवारणे ॥१९॥**

सिँहको गुफामा गए गजमणि पाउन सकिन्छ तर स्यालको खोरमा गए बाच्छाका पुच्छर र गधाका छालाका टुक्रा बाहेक केही भेटिँदैन । (जति साहसिक काम गर्न सक्यो त्यति ठूलो उपलब्धी हात लाग्दछ) । अनपड व्यक्तिको जीवन कुकुर पुच्छरको जस्तै हुन्छ । कुकुरको पुच्छरले न लाज छोप्दछ न झिँगा धपाउन नै सक्दछ ।

## मोक्ष

**वाचा शौचं च मनसः शौचमिन्द्रियनिग्रहः ।**

**सर्वभूते दया शौचमेतच्छौचं परार्थिनाम् ॥२०॥**

यदि तिमी मृत्युपछि मोक्ष चाहन्छौ भने तिम्रो वचन, मन र इन्द्रिय शुद्ध हुनै पर्दछ अनि मनमा पनि दयाको भावना हुनुपर्दछ ।

### परमात्मा

**पुष्पे गन्धं तिले तैलं काष्ठे वह्नि पयो घृतम् ।**
**इक्षौ गुडं तथा देहे पश्याऽऽत्मानं विवेकतः ॥२१॥**

जसरी फूलमा सुगन्ध, तिलमा तेल, काठमा आगो, उखुको सखर रहेको हुन्छ त्यसरी हेर्न सकिए हरेक व्यक्ति भित्र पनि परमात्मा रहेका हुन्छन् ।

**॥ इति सप्तमोऽध्यायः ॥**

॥ सातौं अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

## ॥ अथाष्टमोऽध्यायः ॥

(आठौं अध्याय)

### चाहना

**अधमा धनमिच्छन्ति धनं मानं च मध्यमाः ।**
**उत्तमा मानमिच्छन्ति मानो हि महतां धनम् ॥१॥**

नीचहरू धन, मध्यमस्तरका मानिसहरू धन र मान तथा उच्चस्तरका मानिसहरू मान चाहन्छन् किन कि मान नै ठूलो धन हो ।

### दान

**इक्षुनपः पयो मूलं ताम्बूलं फलमौषधम् ।**
**भक्षयित्वाऽपि कर्तव्याः स्नानदानाऽऽदिकाः क्रियाः ॥२॥**



उखु, पानी, दूध, कन्दमूल, पान, फलफूल र औषधी खाएर पनि स्नान, दान आदि कर्महरू गर्नु, गर्न हुन्छ ।

### सन्तानमा सर्ने गुण

**दीपो भक्षयते ध्वान्तं कज्जलं च प्रसूयते ।**
**यदन्नं भक्ष्यते नित्यं जायते तादृशी प्रजा ॥३॥**

बत्तीले अँध्यारोलाई खान्छ (हटाउँदछ) त्यसैले त्यसबाट कालो धुवाँ वा गाजल निस्कन्छ । यसरी नै मानिसले जेजस्तो अन्न दिनहुँ खान्छ त्यही अनुसारका सन्तान जन्मने गर्दछन् ।

### दान

**वित्तं देहि गुणान्वितेषु मतिमन्नाऽन्यत्रदेहि क्वचित्**

प्राप्तं वारिनिधेर्जलं घनमुखे माधुर्ययुक्तं सदा ।
जीवन्स्थावरजङ्गमाँश्च सकलान् सञ्जीव्य भूमण्डलं
भूयः पश्यति देव कोटिगुणितं गच्छन्तमम्भोनिधिम् ।।४।।

हे विद्वान हो ! आफ्नो सम्पत्ति गुणीलाई नै दानमा देऊ, अरुलाई कहिल्यै नदेऊ । जुन पानी बादलले समुद्रलाई दिन्छ त्यो अति मिठो हुन्छ । बादलले वर्षा मार्फत् त्यो पानी पृथिवीका सबै चलअचल जीवबस्तुलाई दिन्छ अनि समुद्रले त्यो जल अफ्न बढाएर (बादललाई) फर्काइ दिन्छ ।

नीच

चाण्डालानां सहस्रैश्च सूरिभिस्तत्त्वदर्शिभिः ।
एको हि यवनः प्रोक्तो न नीचो यवनात्परः ।।५।।

देवता तथा तत्वविज्ञले हजारौं चाण्डालभन्दा पनि नीच एउटा यवन हुन्छ, यवनभन्दा नीच कोही हुँदैन भनेका छन् ।



अशुद्धता

तैलाभ्यङ्गे चिताधूमे मैथुने क्षौरकर्मणि ।
तावद्भवति चाण्डालो यावत्स्नानं न चाचरेत् ।।६।।

शरीरमा तेल दलेपछि, चिताको धुवाँ शरीरमा पारेपछि, स्त्री-सहवास गरेपछि र कपाल आदि काटेपछि मानिस ननुहाउँदासम्म चाण्डालसमान हुन्छ ।

पानी

अजीर्णे भेषजं वारि जीर्णे तद् बलप्रदम् ।
भोजने चाऽमृतं वारि भोजनान्ते विषप्रदम् ।।७।।

अपच हुँदा पानी औषधी हुन्छ । पचेको बेलामा यसले बल दिन्छ । खाना खाँदै गर्दाको पानी अमृतसमान हुन्छ । खाना खाएपछि लगत्तै पिइने पानी विषसमान हुन्छ ।

### लोप

**हतं ज्ञानं क्रियाहीनं हतश्चाऽऽज्ञानतो नरः ।**
**हतं निर्नायकं सैन्यं स्त्रियो नष्टा ह्यभर्तृकाः ॥८॥**

ज्ञानलाई उपयोग नगरिए लोप हुन्छ । व्यक्ति अज्ञानी भए उ लोप हुन्छ । सेनापति नभएको सेना लोप हुन्छ । पति नभएका स्त्रीहरू नष्ट हुन्छन् ।

### भाग्य

**वृद्धकाले मृता भार्या बन्धुहस्तेगतं धनम् ।**
**भोजनं च पराधीनं तिस्र पुंसां विडम्बनाः ॥९॥**

बुढेसकालमा पत्नीवियोग सहनु पर्ने, सबै धनसम्पत्ति आफन्तलाई सुम्पने तथा खानकै लागि अरुका अधीनमा हुने मानिसहरू अभागी नै हुन् ।



### श्रद्धा

**नाग्निहोत्रं विना वेदाः न च दानं विना क्रियाः ।**
**न भावेन विना सिध्दिस्तस्माद्भावो हि कारणम् ॥१०॥**

मन्त्रबिना होमको, दानबिना धर्मकर्मको र आस्थाबिना सफलता (सिद्धि) प्राप्त हुँदैन । आस्था वा श्रद्धाभाव नै सफलताको मूल हो ।

**न देवो विद्यते काष्ठे न पाषाणे न मृण्मये ।**
**भावे हि विद्यते देवस्तस्माद्भावो हि कारणम् ॥११॥**

न काठमा, न ढुङ्गामा न त माटोमा नै देवता हुन्छन् । आस्थामा नै देवता हुन्छन् । त्यसैले आस्था वा भाव नै ठूलो कुरा हो ।

**काष्ठपाषाणधातूनां कृत्वा भावेन सेवनम् ।**
**श्रद्धया च तया सिद्धिस्तस्य विष्णोः प्रसादतः ॥१२॥**

काठ, पत्थर वा धातुमा पनि श्राले सेवा गरियो भने भगवान् विष्णुका प्रसादले सिद्धि प्राप्त गर्दछ ।

### तप, सुख, रोग र दया

**शान्तितुल्यं तपो नास्ति न सन्तोषात्परं सुखम् ।**
**न तृष्णया परो व्याधिर्न च धर्मो दयासमः ॥१३॥**

मनको शान्तिसमान तपस्या कुनै छैन । सन्तोषसमान कुनै सुख छैन । लोभजस्तो रोग कुनै छैन । दयाभन्दा ठूलो धर्म कुनै छैन ।

### यमराज, वैतरण नदी आदि

**क्रोधो वैवस्वतो राजा तृष्णा वैतरणी नदी ।**
**विद्या कामदुधा धेनुः सन्तोषो नन्दनंवनम् ॥१४॥**

क्रोध नै साक्षात् यमराज हो । लोभ नै साक्षात् वैतरणी नदी हो । ज्ञान नै कामधेनु गाई हो । सन्तोष नै स्वर्ग हो ।

### गहना

**गुणो भूषयते रूपं शीलं भूषयते कुलम् ।**
**सिद्धिर्भूषयते विद्यां भोगी भूषयते धनम् ॥१५॥**

गुणले गहनालेझैं व्यक्तिको सौन्दर्यता बढाउँदछ । असल स्वभाव कुलका गहना हुन् । सफलता विद्याका गहना हो । उचित उपभोग नै धनको गहना हो ।

**नाश हुने अवस्था**

**निर्गुणस्य हतं रूपं दु:शीलस्य हतं कुलम् ।**
**असिद्धस्य हता विद्या अभोगेन हतं धनम्॥१६॥**

गुणहीनताले रूपको, खराब आचरणले कुलको, सफलता हात नलागे विद्याको र मौकामा खर्च नगरे धनको नाश हुन्छ ।

**शुद्ध कुरा**

**शुद्धं भूमिगतं तोयं शुध्दा नारी पतिव्रता ।**
**शुचिः क्षेमकरो राजा सन्तुष्टो ब्राह्मणः शुचिः॥१७॥**

शुद्ध जमिनमा भएको जललाई शुद्ध मानिन्छ । पतिव्रता नारी शुद्ध हुन्छे । क्षमाशील राजा शुद्ध हुन्छ । सन्तोष मान्ने ब्राह्मण शुद्ध हुन्छ ।



**सन्तोष**

**असन्तुष्टा द्विजा नष्टाः संतुष्टाश्च महीभृतः ।**
**सलज्जा गणिकानष्टाः निर्लज्जाश्च कुलाङ्गनाः॥१८॥**

असन्तुष्ट हुने ब्राह्मण नष्ट हुन्छ । सन्तुष्ट हुने राजा नष्ट हुन्छ । लाज मान्ने वेश्या नष्ट हुन्छे । लाज नमान्ने कुलीन स्त्री नष्ट हुन्छे ।

**शिक्षा**

**किं कुलेन विशालेन विद्याहीनेन देहिनाम् ।**
**दुष्कुलीनोऽपि विद्वांश्च देवैरपि सुपूज्यते॥१९॥**

विद्याहीन शरीर लिएर हिँड्ने व्यक्तिलाई कुल ठूलो भएर के भो ? नीच कुलमा जन्मेका भएपनि विद्वानलाई देवताले पूजा गर्दछन् ।

**विद्वान् प्रशंस्यते लोके विद्वान् गच्छति गौरवम् ।**
**विद्यया लभते सर्वं विद्या सर्वत्र पूज्यते ॥२०॥**

विद्वानले नै संसारमा सम्मान प्राप्त गर्दछ र गौरवका साथ हिँड्दछ । विद्याले नै सबै थोक पाइन्छ । विद्या नै सबैतिर पूजित हुन्छ ।

**रूपयौवनसम्पन्ना विशालकुलसम्भवाः ।**
**विद्याहीना नशोभन्ते निर्गन्धा इवकिंशुकाः ॥२१॥**

देख्नमा सुन्दर, जवान र उच्च कुलमा जन्मिएका भएपनि यदि तिनले पढेका छैनन् भने ती बास्ना नआउने पलाँशको फूलजस्तै शोभाहीन हुन्छन् ।

**पृथ्वीका बोझ**



**मांसभक्षैः सुरापानैर्मूर्खैश्चाऽक्षरवर्जितैः ।**
**पशुभिः पुरुषाकारैर्भाराऽऽक्रान्ता च मेदिनी ॥२२॥**

मांसाहारी, जँडयाहा, मूर्ख र अनपढहरू धर्तीका बोझ हुन् र मानिसका अनुहार लिएका पशु हुन् ।

**शत्रु**

**अन्नहीना दहेद्राष्ट्रं मन्त्रहीनश्च ऋत्विजः ।**
**यजमानं दानहीनो नास्ति यज्ञसमो रिपुः ॥**

अन्नहीनता वा भोकमरीले देशलाई र मन्त्रहीनताले यज्ञ गराउने पुरोहितलाई जलाउँदछ । दान नगरी गरिएको होमभन्दा ठूलो शत्रु जजमानका लागि अरु कोही हुँदैन ।

**॥ इत्यष्टमोऽध्यायः ॥**
॥ आठौं अध्यायको नेपालीमा भावानुवाद पूर्ण भयो ॥

# ॥ अथ नवमोऽध्यायः ॥

(नवौं अध्याय)

### मोक्षका उपाय

मुक्तिमिच्छसि चेत्तात ! विषयान् विषवत्त्यज ।
क्षमाऽऽर्जवं दया शौचं सत्यं पीयूषवद्भज ॥१॥

यदि तिमी मोक्ष हुन चाहन्छौ भने गलत आदतलाई विषसमान सम्झी परित्याग गर । क्षमा, सरलता, दया, पवित्रता र सत्यलाई अमृतसमान सम्झी ग्रहण गर ।

### गोप्य कुरा बाहिर ननिकाल्नू

परस्परस्य मर्माणि ये भाषन्ते नराधमाः ।
त एव विलयं यान्ति वल्मीकोदरसर्पवत् ॥२॥



जो मानिस एकअर्काका गोप्य कुरा बताउँदै हिँड्दछन्, ती त्यसरी नै नष्ट हुन्छन् जसरी धमिराको गोलामा छिरेको सर्प नष्ट हुन्छ ।

### ब्रह्माको कमजोरी

गन्धः सुवर्णे फलमिक्षुदण्डे नाऽकारि पुष्पं खलु चन्दनस्य ।
विद्वान् धनाढ्यश्च नृपश्चिरायुः धातुः पुरा कोऽपि न बुद्धिदोऽभूत् ॥३॥

सृष्टिकर्ता ब्रह्माले सुनमा सुगन्ध र उखुको बोटमा फल फलाएनन्, यसैगरी चन्दनको वृक्षमा निश्चय नै फूल पनि फुलाएनन् । अनि विद्वान व्यक्तिलाई धेरै धनी र राजालाई धेरै आयुको पनि बनाएनन् । यसबाट यस्तो लाग्दछ कि प्राचीनकालमा प्रभूलाई बुद्धि दिने पनि कोही रहेनछ ।

### श्रेष्ठ कुरा

सर्वौषधीनाममृतं प्रधाना सर्वेषु सौख्येष्वशनं प्रधानम् ।

**सर्वेन्द्रियाणां नयनं प्रधानं सर्वेषु गात्रेषु शिरः प्रधानम् ॥४॥**

सबै औषधीमा अमृत, सबै सुखदायक कुरामा भोजन, सबै इन्द्रियमा आँखा र सबै अङ्गमा टाउको श्रेष्ठ हुन्छ ।

### प्राचीन विद्वानको प्रशंसा

**दुतो न सञ्चरति खे न चलेच्च वार्ता पुर्वं न जल्पितमिदं न च सङ्गमोऽस्ति ।**
**व्योम्नि स्थितं रविशशिग्रहणं प्रशस्तं जानाति यो द्विजवरः सकथं न विद्वान् ॥५॥**

आकाशमा कुनै दूत जान पनि सम्भव छैन, त्यहाँ कसैसँग कुनै किसिमको कुराकानी पनि हुन सक्दैन, तर जुन् ब्राह्मणले आकाशमा सूर्य र चन्द्र ग्रहणका कुरा बताए, तिनलाई विद्वान किन नमान्नु ?

### सुतेका बेलामा उठाउन हुने व्यक्ति

**विद्यार्थी सेवकः पान्थः क्षुधाऽऽर्तो भयकातरः ।**
**भाण्डारी प्रतिहारश्च सप्त सुप्तान् प्रबोधयेत् ॥६॥**



विद्यार्थी, सेवक, बटुवा, भोकाएको व्यक्ति, डराएको व्यक्ति, भण्डारे र द्वारपाल : यी सातलाई निदाएको देखिए उठाइ दिनू ।

### सुतेका बेलामा उठाउन नहुने व्यक्ति

**अहिं नृपं च शार्दुलं किटिं च बालकं तथा ।**
**परश्वानं च मूर्खं च सप्त सुप्तान्न बोधयेत् ॥७॥**

सर्प, राजा, बाघ, सुँगुर, बालक, अर्काको कुकुर र मूर्ख : यी सातलाई सुतेको अवस्थामा पाए नउठाउनू ।

**धन कमाउन वेदको प्रयोग नगर्नू**

**अर्थाऽधीताश्च यैर्वेदास्तथा शूद्रान्न भोजिनः ।**
**ते द्विजाः किं करिष्यन्ति निर्विषा इव पन्नगाः ॥८॥**

जो ब्राह्मण धन कमाउने इच्छाले वेद पढ्दछन् अनि जो नीच मानिसको अन्न खान्छन्, ती विषहीन सर्प जस्तै केही पनि गर्न सक्दैनन् ।

**यस्ता व्यक्ति रिसाएर के काम ?**

**यस्मिन् रुष्टे भयं नास्ति तुष्टे नैव धनागमः ।**
**निग्रहोऽनुग्रहो नास्ति स रुष्टः किं करिष्यति ॥९॥**

जो रिसाएर पनि केही डर हुँदैन अनि जो खुशी भएर पनि धन पाइँदैन, जो न दण्ड दिन सक्दछ न त दया देखाउन नै, त्यो रिसाएर कसैको केही पनि बिग्रँदैन ।



**आडम्बर**

**निर्विषेणापि सर्पेण कर्तव्या महती फणा ।**
**विषमस्तु न चाप्यस्तु घटाटोप भयङ्करः ॥१०॥**

विष नभएकै भएपनि सर्पले आफ्नो फणा फैलाउनु पर्दछ, त्यो सर्पमा विष छ कि छैन भनेर कस्ले जान्दछ र ? यसले वा यो आडम्बरले गर्दा पनि मानिस भयभीत भने अवश्य हुन सक्दछन् ।

**समय कटाइ**

**प्रातर्द्यूतप्रसङ्गेन मध्याह्ने स्त्रीप्रसङ्गतः ।**
**रात्रौ चौरप्रसङ्गेन कालो गच्छत्यधीमताम् ॥११॥**

मूर्खहरूको बिहान जुवातास खेलेर, मध्य दिनको समय ग्राम्यधर्ममा संलग्न भएर र रातको समय चोरी आदि गरेर बित्ने गर्दछ ।

### उत्तम कुरा

**स्वहस्तग्रथिता माला स्वहस्तघृष्टचन्दनम् ।**
**स्वहस्तलिखितं स्तोत्रं शक्रस्यापि श्रियं हरेत् ॥१२॥**

आफ्नै हातले गाँसिएको माला, आफ्नै हातले घोटिएको चन्दन र आफ्नै हातले लेखिएको भगवान्को स्तुतिले इन्द्रको सम्पत्तिलाई पनि आफ्नो वशमा गराउन सकिन्छ । (सक्षम व्यक्तिले अरु मार्फत धर्मकर्म नगराउनू) ।

### जति घोट्यो त्यति निखार आउने कुरा

**इक्षुदण्डास्तिलाः शुद्राः कान्ता काञ्चनमेदिनी ।**
**चन्दनं दधि ताम्बूलं मर्दनं गुणवर्धनम् ॥१३॥**

उखु, तिल, नीच व्यक्ति, स्त्री, सुन, जमिन, चन्दन, दही र पान : यी कुरा जति बढी माडिन्छन् ( मर्दन गरिन्छन् वा घोटिन्छन्) त्यति बढी गुनिला हुन्छन् ।

### गलत असर हटाउने उपाय

**दरिद्रता धीरतया विराजते कुवस्त्रता शुभ्रतया विराजते ।**
**कदन्नता चोष्णतया विराजते कुरूपता शीलयुता विराजते ॥१४॥**

दरिद्रतालाई धैर्यताले, मैलो कपडालाई धुनाले, कुअन्नलाई तातताते खानाले र कुरूपतालाई असल शीलस्वभावले हटाउन सकिन्छ ।

**॥ इति नवमोऽध्यायः ॥**
॥ नवौं अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

# ॥ दशमोऽध्यायः ॥
(दशौं अध्याय)

### विद्याधन

**धनहीनो न हीनश्च धनिकः स सुनिश्चयः ।**
**विद्यारत्नेन हीनो यः स हीनः सर्ववस्तुषु ॥१॥**

धनहीन भएपनि विद्या कमाएको छ भने मानिस हीन हुँदैन । तर जो मानिस विद्या-रत्नले हीन छ उ सबै कुराले हीन मानिन्छ ।

### ध्यानदिन योग्य कुरा

**दृष्टिपुतं न्यसेत् पादं वस्त्रपूतं पिबेज्जलम् ।**
**शास्त्रपूतं वदेत् वाक्यं मनःपूतं समाचरेत् ॥२॥**



आँखा हेरेर गोडा चाल्नू, कपडाले छानेर पानी पिउनू, शास्त्रसम्मत् कुराकानी गर्नू र सबै कुरा शुद्ध मनले सोचेर गर्नू ।

### विद्यार्थीका कर्तव्य

**सुखार्थी च त्यजेद्विद्यां विद्यार्थी च त्यजेत् सुखम् ।**
**न विद्यासुखयोः सन्धिस्तेजस्तिमिरयोरिव ॥३॥**

सुख चाहनेले विद्या र विद्या चाहनेले सुखलाई त्याग गर्नू किन कि उज्योलो र अन्धकारको मेल नभए जस्तै विद्या र सुखको पनि मेल हुँदैन ।

### चरित्र वा योग्यता

**कवयः किं न पश्यन्ति किन्न कुर्वन्ति योषितः ।**
**मद्यपाः किं न जल्पन्ति किं न खादन्ति वायसाः ॥४॥**

कविले के मात्रै देख्दैन ? स्त्रीले के मात्रै गर्न सक्दिन ? नसाले मात्तिएको व्यक्तिले के मात्रै बोल्दैन ? कागले के मात्रै खाँदैन ?

भाग्य

**रङ्कं करोति राजानं राजानं रङ्कमेव च ।**
**धनिनं निर्धनं चैव निर्धनं धनिनं विधिः ॥५॥**

भाग्यले राजालाई भिखारी र भिखारीलाई राजा बनाइ दिन्छ । यसैगरी यसले धनीलाई कङ्गाल र कङ्गाललाई धनी बनाइ दिन्छ ।

शत्रु

**लुब्धानां याचकः शत्रुर्मूर्खाणां बोधको रिपुः ।**
**जारस्त्रीणां पतिः शत्रुश्चौराणां चन्द्रमा रिपुः ॥६॥**

केही कुराको आश गर्नेलाई लोभी मानिस शत्रु हुन्छ । मूर्खलाई उपदेश दिने मानिस शत्रु हुन्छ । जारसँग पल्केकी पत्नीलाई पति शत्रु हुन्छ । चोरलाई चन्द्रमा वा उज्यालो शत्रु हुन्छ ।

पृथ्वीका भार

**येषां न विद्या न तपो न दानं न चापि शीलं न गुणो न धर्मः ।**
**ते मृत्युलोके भुवि भारभूता मनुष्यरूपेण मृगाश्चरन्ति ॥७॥**

जो मानिसले पढेको छैन, तपस्या गरेको छैन, दान दिएको छैन अनि जोसँग राम्रो शीलस्वभाव, असल गुण पनि छैन अनि जो धर्मकर्म पनि गर्दैन त्यो मानिस पृथ्वीको भार बनी घुमिरहेको पशुसमान हो ।

### सामान्यतः स्वभाव बदलिँदैन

**अन्तः सारविहीनानामुपदेशो न जायते ।**
**मलयाचलसंसर्गान्न वेणुश्चन्दनायते ॥८॥**

भित्री योग्यता नहुने मानिसलाई दिइएका उपदेश काम लाग्दैनन्, व्यर्थ हुन्छन् । मलयाचल पर्वतमा चन्दनको वृक्षसँगै उम्रिएको हो भन्दैमा बाँसमा चन्दनका गुण विकसित हुँदैनन् ।

मलयाचल : नेपालको महाभारत पर्वत श्रृङ्खला जस्तै भारतको मुख्य सात पर्वत श्रृङ्खलामध्ये दक्षिण भारतको प्रसिद्ध एक पर्वत श्रृङ्खलालाई मलयाचल भनिन्छ । यो मैसूरको पश्चिमभागबाट शुरु हुँदै ट्रावनकोर राज्यको पूर्वी सीमा भएर गएको छ । महाकवि भवभूतिले यस पर्वत श्रृङ्खलालाई कावेरी नदीले घेरिएको भनेका छन् । यस पर्वत श्रृङ्खलामा अलैंची, मरीच, श्रीखण्ड र सुपारी अधिकमात्रामा हुने गर्दछ । यहाँबाट कृतमाला वा बेगई र उत्पलावती नामका २ नदी निस्केका छन् ।

### आफ्नो बुद्धि हुनु पर्दछ



**यस्य नास्ति स्वयं प्रज्ञा शास्त्रं तस्य करोति किम् ।**
**लोचनाभ्यां विहीनस्य दर्पणः किं करिष्यति ॥९॥**

जोसँग आफ्नो बुद्धि हुँदैन, शास्त्रले त्यसलाई के पो गर्न सक्दछ र ? दृष्टिहीनलाई ऐनाले के गर्न सक्दछ र ?

### दुर्जन सुधार्ने उपाय छैन

**दुर्जनं सज्जनं कर्तुमुपायो न हि भूतले ।**
**अपानं शतधा धौतं न श्रेष्ठमिन्द्रियं भवेत् ॥१०॥**

यो संसारमा दुर्जनलाई सज्जन बनाउन सकिने कुनै उपाय छैन । किन कि मलद्वारलाई सैयौं पटक सफा गरेपनि त्यो शरीरको श्रेष्ठ अङ्ग बन्न सक्दैन ।

### द्वेष

**आत्म(आप्त)द्वेषात् भवेन्मृत्युः परद्वेषात् धनक्षयः ।**
**राजद्वेषात् भवेन्नाशो ब्रह्मद्वेषात् कुलक्षयः ॥११॥**

आफ्नै आत्मालाई (ठूलोसँग) शत्रु बनाउने मानिस चाँडै मर्दछ । अरुसँगै वैरभाव गर्दा धनको हानी हुन्छ । राजासँग द्वेष गर्दा सर्वनाश हुन्छ । ब्राह्मणसँग वा ईश्वरसँग द्वेष गरे कुलको नाश हुन्छ ।

### दरिद्रता

**वरं वने व्याघ्रगजेन्द्रसेविते द्रुमालये पत्रफलाम्बुसेवनम् ।**
**तृणेषु शय्या शतजीर्णबल्कलं न बन्धुमध्ये धनहीनजीवनम् ॥१२॥**

बरु बाघ, सिँहले भरिएको बनमा गई कुनै वृक्षालाई घर बनाएर बस्नू, वृक्षका पात र फल अनि पानी खाएर जीवन गुजारा गर्नू, घाँसपातको ओछ्यानमा सुत्नू, फाटेका र पुराना रूखका बोक्रालाई वस्त्र बनाउनू तर आफन्तका बीचमा धनहीन वा दरिद्र भएर नबाँच्नू ।



### सन्ध्योपासना गर्नू

**विप्रो वृक्षस्तस्य मूलं च सन्ध्या वेदाः शाखा धर्मकर्माणि पत्रम् ।**
**तस्मान्मूलं यत्नतो रक्षणीयं छिन्ने मूले नैव शाखा न पत्रम् ॥१३॥**

ब्राह्मण एउटा वृक्ष समान हुन्छ, सन्ध्योपासना त्यो वृक्षका जरा हुन्, वेद त्यसका हाँगाबिँगा हुन्, धर्मकर्म त्यसका पात हुन् । यसैले प्रयत्नपूर्वक जरालाई रक्षा गर्नू किन कि जरा नै नाश भएपछि न हाँगा बच्दछन् न त पात नै ।

### मातापिताको स्थान

**माता च कमलादेवी पिता देवो जनार्दनः ।**
**बान्धवा विष्णुभक्ताश्च स्वदेशे भुवनत्रयम् ॥१४॥**

जसकी माता लक्ष्मी र पिता विष्णु हुन्छन् अनि जसका प्रभूभक्त आफन्त हुन्छन् उसका लागि तीन वटै लोक आफ्नो देशसमान हुन्छन् ।

### शोक नगर

**एकवृक्षसमारूढा नानावर्णा बिहङ्गमाः ।**
**प्रभाते दिक्षु दशसु यान्ति का परिवेदना ॥१५॥**

रातमा एउटै वृक्षमा आएर बास बसेका अनेक रङ्का चराहरू बिहान हुनासाथ दशवटा दिशातिर उडेर जाने गर्दछन् । यसमा किन चिन्ता वा शोक गर्नु ? ।

### बलभन्दा बुद्धि ठूलो

**बुद्धिर्यस्य बलं तस्य निर्बुद्धेश्च कुतो बलम् ।**
**वने सिँहो मदोन्मत्तो जम्बुकेन निपातितः ॥१६॥**



जोसँग बुद्धि हुन्छ, बल पनि त्यसैसँग हुन्छ, बुद्धिहीनसँग कहाँबाट बल हुनु ? जङ्गलमा आफ्ना शक्तिमा मदहोश भएको सिँहलाई एउटा स्यालले मारेको थियो ।

### भगवान्को सेवा गर्दा चिन्ता हुँदैन

**का चिन्ता मम जीवने यदि हरिर्विश्वम्भरो गीयते**
**नो चेदर्भकजीवनाय जननीस्तन्यं कथं निःसरेत् ।**
**इत्यालोच्य मुहुर्मुहुर्यदुपते लक्ष्मीपते केवलं**
**त्वत्पदाम्बुजसेवनेन सततं कालो मया नीयते ॥१७॥**

यदि भगवान् विष्णुलाई सारा संसारको पालनकर्ता भनिएको छ भने मलाई जीवनमा कुनै कुराको चिन्ता छैन । यदि उनी हुँदैनथे त गर्भमा रहेको बालकलाई भविष्यमा खुवाउन भनी उसकी आमाका स्तनमा दूध कहाँबाट आउँदथ्यो ? पटकपटक यस्तो सोचेर नै हे तीन लोकका स्वामी ! म हजुरका चरणकमलको सेवा गर्दै आफ्नो जीवन बिताइरहेको छु ।

### अन्य भाषाको ज्ञान

**गीर्वाणवाणीषु विशिष्टबुद्धिस्तथापि भाषान्तरलोलुपोऽहम् ।**
**यथा सुराणाममृते च सेविते स्वर्गाङ्गनानामधरासवे रुचिः ॥१८॥**

संस्कृत बाहेकका अन्य भाषामा पनि मलाई अभिरुची वा लोभ छ, मेरो यो लोभ भनेको अमृत हुँदाहुँदै पनि अप्सराको ओठको रस चुस्न चाहने देवताहरूको लोभ जस्तै हो ।

### घिउको शक्ति

**अन्नाद्दशगुणं पिष्टं पिष्टाद्दशगुणं पयः ।**
**पयसोऽष्टगुणं मांसं मांसाद्दशगुणं घृतम् ॥१९॥**

अन्नभन्दा दश गुना बढी शक्ति त्यसैको पिठोमा हुन्छ । पिठाकोभन्दा दश गुना बढी शक्ति दूधमा हुन्छ । दूधको भन्दा आठ गुना बढी शक्ति मासुमा हुन्छ । मासुको भन्दा दश गुना बढी शक्ति घिउमा हुन्छ ।



### सागपात, दूध आदि

**शाकेन रोगा वर्द्धन्ते पयसो वर्द्धते तनुः ।**
**घृतेन वर्द्धते वीर्यं मांसान्मासं प्रवर्द्धते ॥२०॥**

सागपात रोग, दूधले शरीर, घिउले वीर्य र मासुले मासु बढ्दछ ।

## ॥ इति दशमोऽध्यायः ॥

॥ दशौं अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

## ॥ अथैकादशोऽध्यायः ॥
(एघारौं अध्याय)

### वदल्न नसकिने मानवीय स्वभाव

**दातृत्वं प्रियवक्तृत्वं धीरत्वमुचितज्ञता ।**
**अभ्यासेन न लभ्यन्ते चत्वारः सहजा गुणाः ॥१॥**

दानशीलता, मिठो वचन वा भाषण, धैर्यता र विवेक : यी कुरा मानिसका सहज वा जन्मसिद्ध स्वभाव हुन् यिनलाई अभ्यास गरेर प्राप्त गर्न सकिँदैन । (सबै मानिसमा हुने यी गुणलाई विविध कुराले छोपेको हुन्छ त्यसलाई उघार्न सक्नु वा नसक्नु बेग्लै कुरा हो ।)

### समुदाय परिवर्तन घातक हुन्छ

**आत्मवर्गं परित्यज्य परवर्गं समाश्रयेत् ।**
**स्वयमेव लयं याति यथा राज्यमधर्मतः ॥२॥**

जो मानिस आफ्नो समुदायलाई छाडी अर्काको समुदायमा गएर मिसिन्छ उ त्यसरी नै नष्ट हुन्छ जसरी अधर्मी राज्य नष्ट हुन्छ ।



### तेज नै ठूलो हो आकार होइन

**हस्ती स्थूलतनुः स चाङ्कुशवशः किं हस्तिमात्रोङ्कुशो**
**दीपे प्रज्वलिते प्रणश्यति तमः किं दीपमात्रं तमः ।**
**वज्रेणापि हताः पतन्ति गिरयः किं वज्रमात्रानगा-**
**स्तेजो यस्य विराजते स बलवान् स्थूलेषु कः प्रत्ययः ॥३॥**

मोटो हात्तीलाई एउटा सानु अङ्कुशेको वशमा रहन्छ तर के त्यो अङ्कुशे हात्तीजत्रै ठूलो हुन्छ र ? दियो बल्दा अन्धकार नाश हुन्छ तर अन्धकार दियो जत्रै सानो हुन्छ र ? चटयाङ परेर वा घनले हानेर ठूलठूला पहाड ढल्दछ तर के वज्रको आकार पर्वत जत्रै ठुलो हुन्छ र ? । यस्तो होइन, हरेक कुरा आफ्नो तेजका कारणले नै बलिया हुन्छन्, आकारले कुनै अर्थ राख्दैन ।

### पृथ्वी छाड्ने क्रम

**कलौ दशसहस्राणि विष्णुस्तिष्ठति मेदिनीम् ।**

**तदर्धं जाह्नवीतोयं तदर्धं ग्रामदेवताः ॥४॥**

कलियुगको दश हजार वर्ष बितेपछि हरि भगवान्ले पृथ्वी छाड्नु हुन्छ । त्यसको आधा वर्ष बितेपछि गङ्गाले र त्यसको पनि आधा वर्ष बितेपछि ग्रामदेवताले पृथ्वीलाई छाड्दछन् । कसैले यसलाई बिन्न बाँकी भएपछि भनेर पनि अर्थ लगाएका छन् । कतिपयले यो श्लोक प्रक्षिप्त हो पनि भनेका छन् ।

**नहुने कुरा**

**गृहाऽऽसक्तस्य नो विद्या न दया मांसभोजिनः ।**
**द्रव्यलुब्धस्य नो सत्यं स्त्रैणस्य न पवित्रता ॥५॥**

घरप्रति आसक्ति वा मोह बढी हुनेले विद्या आर्जन गर्न सक्दैन, जसले मासु खान्छ उसमा दया हुँदैन, जसको धनप्रति आसक्ति छ उसमा सत्यता हुँदैन अनि भोगविलासमा लिप्त हुने मानिसमा पवित्रता हुँदैन ।



**दुर्जन**

**न दुर्जनः साधुदशामुपैति बहुप्रकारैरपि शिक्ष्यमाणः ।**
**आमूलसिक्तः पयसा घृतेन न निम्बवृक्षौमधुरत्वमेति ॥६॥**

जसरी दूध र घिउले सिँचाई गरिरहे पनि नीमको बोटमा गुलियोपन आउँदैन त्यसैगरी दुर्जनलाई जतिसुकै सम्झाए, बुझाए र पढाए पनि सज्जन हुन सक्दैन ।

**दुष्टको मन**

**अन्तर्गतमलो दुष्टः तीर्थस्नानशतैरपि ।**
**न शुध्यति यथा भाण्डं सुराया दाहितं च तत् ॥७॥**

मदिरा हालिएको भाँडो आगोमा जलाउँदा पनि शुद्ध पवित्र नभए जस्तै कामवासना जस्ता विकृति भरिएको दुष्टको मन सयौं पटक तीर्थस्नान गरे पनि शुद्ध पवित्र हुँदैन ।

### महत्व पहिचान

**न वेत्ति यो यस्य गुणप्रकर्षं स तं सदा निन्दति नाऽत्र चित्रम् ।**
**यथा किराती करिकुम्भलब्धां मुक्तां परित्यज्य बिभर्ति गुञ्जाम् ॥८॥**

जसलाई जसको गुणको महत्व थाहा हुँदैन उ त्यसलाई हरपल निन्दा गरिरहन्छ । यसमा कुनै आश्चर्य मान्नुपर्ने कुरो नै छैन किन कि किरातिनीहरू हात्तीको शिरबाट उत्पन्न भएको मोतिलाई छाडी रातीगेडीको माला नै लगाउने गर्दछन् ।

### नबोली भोजन गर्दाका लाभ

**ये तु संवत्सरं पूर्णं नित्यं मौनेन भुञ्जते ।**
**युगकोटिसहस्रं ते पूज्यन्ते स्वर्गविष्टपे ॥९॥**

जो व्यक्ति पूरा एकवर्षसम्म दिनहुँ मौन भएर (नबोलीकन) खाना खाने गर्दछ उ एक करोड वर्षसम्म स्वर्गमा सम्मानित हुन पाउँदछ ।



### विद्यार्थीले त्याग गर्नुपर्ने कुरा

**कामक्रोधौ तथा लोभं स्वादुश्रृङ्गारकौतुके ।**
**अतिनिद्राऽतिसेवे च विद्यार्थी ह्यष्ट वर्जयेत् ॥१०॥**

विद्यार्थीले काम, क्रोध, लोभ, स्वादिला कुराको चाहना, श्रृङ्गारपटार, खेल-तमासा, धेरै सुत्ने कार्य र चापलुसी : यी आठ काम गर्न छाड्नू ।

### ऋषि-ब्राह्मण

**अकृष्टफलमूलानि वनवासरतिः सदा ।**
**कुरुतेऽहरहः श्राद्धमृषिर्विप्रः स उच्यते ॥११॥**

खेती नगरी आफैं उम्रिएका फलफूल र कन्दमूल खाँदै प्रसन्न मनले हरेक दिन श्राद्ध गर्ने ब्राह्मणलाई ऋषि भनिन्छ ।

**द्विज-ब्राह्मण**

**एकाहारेण सन्तुष्टः षट्कर्मनिरतः सदा ।
ऋतुकालाभिगामी च स विप्रो द्विज उच्यते ॥१२॥**

एक छाक भोजनले सन्तुष्ट हुँदै, तोकिएका छ कर्म गर्दै र ऋतुकालमा मात्र आफ्नी पत्नीसँग ग्राम्यधर्ममा संलग्न हुने ब्राह्मणलाई द्विज भनिन्छ ।

**वैश्य-ब्राह्मण**

**लौकिके कर्मणि रतः पशूनां परिपालकः ।
वाणिज्यकृषिकर्ता यः स विप्रो वैश्य उच्यते ॥१३॥**

समान्य किसिमका व्यवहारिक कार्यमा संलग्न हुने तथा पशुपालन, ब्यापार वा कृषिकर्म गर्ने ब्राह्मणलाई वैश्य भनिन्छ । 

**शूद्र-ब्राह्मण**

**लाक्षादितैलनीलीनां कुसुम्भमधुसर्पिषाम् ।
विक्रेता मद्यमांसानां स विप्रः शूद्र उच्यते ॥१४॥**

लाहा, तेल , नीर, कुसुम वा केसर, मह, घिउ, मदिरा र मासुको ब्यापार गर्ने ब्राह्मणलाई शूद्र ब्राह्मण भनिन्छ ।

**मार्जार-ब्राह्मण**

**परकार्यविहन्ता च दाम्भिकः स्वार्थसाधकः ।
छली द्वेषी मृदुः क्रूरो विप्रो मार्जार उच्यते ॥१५॥**

अरुले गरिरहेको कार्य नाश गर्ने, ढोँगी वा अभिमानी, आफ्नै स्वार्थ सिद्धमा लागिपर्ने, छलकपट गर्ने, द्वेष गर्ने र भित्रीरूपमा क्रूर ब्राह्मणलाई मार्जार (बिरालो) भनिन्छ ।

### म्लेच्छ-ब्राह्मण

वापीकूपतडागानामारामसुरवेश्मनाम् ।
उच्छेदने निराशंकः स विप्रो म्लेच्छ उच्यते ॥१६॥

वापी, कुवा, तलाउ, बगैँचा, देवालय आदि तोडफोड गर्न अलिकति पनि नडराउने खालको ब्राह्मणलाई म्लेच्छ भनिन्छ ।

### चाण्डाल-ब्राह्मण

देवद्रव्यं गुरुद्रव्यं परदाराभिमर्शनम् ।
निर्वाहः सर्वभूतेषु विप्रश्चाण्डाल उच्यते ॥१७॥

देवधन, गुरुधन र अर्काको पत्नीलाई भोग गर्ने तथा जस्तासुकै प्राणीसँग मिलेर जीवन चलाउने खालको ब्राह्मणलाई चाण्डाल भनिन्छ ।



### दान गर

देयं भोज्यधनं सुकृतिभिर्नो सञ्चयस्तस्य वै
श्रीकर्णस्य बलेश्च विक्रमपतेरद्यापि कीर्तिः स्थिता ।
अस्माकं मधुदानभोगरहितं नष्टं चिरात्सञ्चितं
निर्वाणादिति नष्टपादयुगलं घर्षन्त्यहो मक्षिकाः ॥१८॥

भोग्य धनलाई सञ्चय नगरी असल कर्मका लागि दान दिनू । कर्ण, बलि र विक्रमादित्यको दान दिएकै कारण आजसम्म कीर्ति रहेको छ । जब लामो सकय लगाएर सञ्चित गरिएको धन नष्ट हुन थाल्दछ तब उ मौरीले मह नष्ट हुँदा पछुताए जसरी पछुताउन थाल्दछ ।

॥ इत्येकादशोऽध्यायः ॥
(एघारौं अध्यायको नेपाली भावानुवाद पूर्ण भयो)

# ॥ अथ द्वादशोऽध्यायः ॥

(बाह्रौँ अध्याय)

### सुखी घरका लक्षण

**सानन्दं सदनं सुतास्तु सधियः कान्ता प्रियालापिनी**
**इच्छापूर्तिधनं स्वयोषितिरतिः स्वाज्ञापराः सेवकाः**
**आतिथ्यं शिवपूजनं प्रतिदिनं मिष्टान्नपानं गृहे**
**साधोः सङ्गमुपासते च सततं धन्यो गृहस्थाश्रमः ॥१॥**

जसका छोराछोरी बुद्धिमान् छन्, जसकी पत्नी मिठो वचन बोल्दछिन्, जो परिश्रमी छ, जोसँग इमान्दार तरिकाले कमाएको चाहना पूरा गर्नसक्ने धन छ, जो आफ्नीसँग रमाएको छ, जसका आज्ञाकारी सेवकहरू छन्, जहाँ दिनहुँ अतिथि र शिवको पूजा हुने गर्दछ, जहाँ मिठो खानपिन उपलब्ध हुन्छ, जहाँ हरदम साधुसज्जनहरूसँग सङ्गत गर्ने अवसर प्राप्त हुन्छ त्यही घर नै सुखी घर हुने गर्दछ । यस्तो गृहस्थाश्रम प्रशंसा योग्य हुने गर्दछ ।



### दानको फल

**आर्तेषु विप्रेषु दयान्वितश्च यच्छ्रद्धया स्वल्पमुपैति दानम् ।**
**अनन्तपारं समुपैति राजन् यद्दीयते तन्न लभेद् द्विजेभ्यः ॥२॥**

हे राजन्! दयालु र दुःखी ब्राह्मणलाई श्रद्धापूर्वक जेजति दान दिइन्छ त्यो त्यतिमात्र आफूले पाइँदैन, त्यो दान असंख्य गुना भएर पाइरहिन्छ ।

### कुशलतापूर्वक बाँच्ने तरिका

**दाक्षिण्यं स्वजने दया परजने शाठ्यं सदा दुर्जने**
**प्रीतिःसाधुजने स्मयः खलजने विद्वज्जने चार्जवम् ।**
**शौर्यं शत्रुजने क्षमा गुरुजने नारीजने धूर्तता**
**इत्थं ये पुरुषा कलासु कुशलास्तेष्वेवलोकस्थितिः ॥३॥**

आफन्तसँग सज्जन भई नम्र व्यवहार गर्ने, अरुलाई दया गर्ने, दुर्जनसँग सोही अनुसारको बाङ्गो व्यवहार गर्ने, साधुसज्जनलाई माया गर्ने, नीचसँग कठोर व्यवहार गर्ने, विद्वानसँग सरल र सत्य व्यवहार गर्ने, शत्रूसँग बहादुर हुने, गुरुजनप्रति सहनशील हुने र स्त्रीलाई हदभन्दा बढी विश्वास नगर्ने मानिस नै यो संसारमा कुशलतापूर्वक बाँच्न सक्षम हुन्छ ।

**धर्तीको बोझ**

**हस्तौ दानविवर्जितौ श्रुतिपुटौ सारस्वतद्रोहिणौ**
**नेत्रे साधुविलोकनेन रहिते पादौ न तीर्थं गतौ ।**
**अन्यायार्जितवित्तपूर्णमुदरं गर्वेण तुङ्गं शिरो**
**रे रे जम्बुक मुञ्च मुञ्च सहसा निन्द्यं सुनिन्द्यं वपुः ॥४॥**

जसका दुवै हात दानकर्मबाट वञ्चित छन्, जसका दुवै कानले कहिल्यै वेद आदि शास्त्र सुनेका छैनन् वा विद्याप्रति द्वेष राख्दछन्, जसका दुवै आँखाले कहिल्यै साधुसज्जनको दर्शन गरेका छैनन्, जसका दुवै गोडाले कहिल्यै तीर्थ वा माता, पिता आदि गुरुतिर असल नियतले गएका छैनन् अनि जसले अन्यायपूर्वक कमाएको धनले पेट भर्ने गरेको छ । यस्ता कर्म गरेर पनि टाउको ठाडो पारेर हिँडिरहेको हे स्यालसमानको मानिस ! तँलाई धिक्कार छ । तँ अत्यन्त निन्दनीय तेरो यो शरीरलाई जतिसक्यो चाँडो त्याग गर ।



**येषां श्रीमद्यशोदा सुतपदकमले नास्ति भक्तिर्नराणां**
**येषामाभीरकन्याप्रियगुणकथने नानुरक्ता रसज्ञा ।**
**येषां श्रीकृष्णलीलाललितरसकथा सादरौनैव कर्णौ**
**धिक्तान्धिक्तान्धिगेतान्कथयति सततं कीर्तनस्थोमृदङ्गः ॥५॥**

जुन मानिसको यशोदाका पुत्र (श्रीकृष्ण) का चरणकमलमा भक्ति छैन, जसको जिभ्रोले आभीर (महाभारतका अनुसार सिन्धु र सरस्वती नदीको तीरमा बस्ने एक क्षत्रिय जाति, अहिर) कन्याका प्रिय (श्रीकृष्ण)का गुणगानमा लगाव राख्दैन, अनि जसका कान श्रीकृष्णका लिलारूपी सुन्दर कथा आदरपूर्वक सुन्ने गर्दैनन् त्यस्ता मानिसलाई मादलले कीर्तन गर्दा धिक्कार छ, धिक्कार छ, तँलाई धिक्कार छ (धिक् तां, धिक् तां, धिगेतां) भन्ने गर्दछ ।

### भाग्य

**पत्रं नैव यदा करीरविटपे दोषो वसन्तस्य किं**
**नोलूकोऽप्यवलोकते यदि दिवा सूर्यस्य किं दूषणम् ।**
**वर्षं नैव पतेत्तु चातकमुखे मेघस्य किं दूषणं**
**यत्पूर्वं विधिना ललाटलिखितं तन्मार्जितुं कः क्षमः ॥६॥**

करीर नामक झाडीमा पात पलाउँदैन त त्यसमा वसन्त ऋतुको के दोष ? लाटोकोसेरोले दिनमा आँखा देख्दैन भने त्यसमा सूर्यको के दोष ? काकाकुलको मुखमा पानी पर्दैन त त्यसमा बादलको के दोष ? पहिले विधाताले खप्परमा जे लेखिदिएका छन्, त्यसलाई कसैले मेटाउन सक्दैन, भोग्नु नै पर्दछ ।

### सङ्गत

**सत्सङ्गाद्भवति हि साधुता खलानां साधूनां न हि खलसङ्गतः खलत्वम् ।**
**आमोदं कुसुमभवं मृदेव धत्ते मृद्गन्धं नहि कुसुमानि धारयन्ति ॥७॥**



सज्जनसँगको सङ्गत गर्नाले दुर्जन पनि सज्जन बन्न सक्दछ । तर दुर्जनसँगको सङ्गतले सज्जनमा दुर्जनका गुण त्यसरी नै सर्दैनन् जसरी फूलमा पाइने सुगन्ध माटोमा सरेपनि माटोको गन्ध फूलमा सर्दैन ।

### साधुको दर्शन

**साधूनां दर्शनं पुण्यं तीर्थभूता हि साधवः ।**
**कालेन फलते तीर्थं सद्यः साधुसमागमः ॥८॥**

तीर्थका रूप भएकाले साधुको दर्शन गर्नाले पुण्य प्राप्त हुन्छ । तीर्थले फल दिन समय लाग्दछ तर साधुले तुरुन्त फल दिन्छन् ।

### जीवन जिउने तरिका

**विप्राऽस्मन्नगरे महान् कथय कस्तालद्रुमाणां गणः**
**को दाता रजको ददाति वसनं प्रातर्गृहीत्वा निशि ।**
**को दक्षः परवित्तदारहरणे सर्वोऽपि दक्षो जनः**
**कस्माज्जीवसि हे सखे विषकृमिन्यायेन जीवाम्यहम् ॥९॥**

कुनै एक बटुवा व यात्री कुनै एक शहरमा पुगेर कुनै ब्राह्मणलाई सोद्धछ-हे ब्राह्मण ! यस शहरमा सबभन्दा ठूलो को हो ? ती ब्राह्मण उत्तर दिए-ताडका वृक्षहरूको समूह । यात्रीले फेरी सोधे-यो शहरमा ठूलो दाता को छ ? उसलाई "धोबी नै सबभन्दा ठूलो दाता हो, उ बिहान कपडा धुन वा रङ्गाउन जान्छ साँझ फर्कन्छ" भनी जवाफ दिए । यात्रुले पुनः "यस शहरमा सबभन्दा चलाख मानिस को छ ?" । तब ब्राह्मणले उत्तर दिए "यस शहरमा रहेका सबै मानिस अर्काको धन र स्त्री हरण गर्नमा चलाख छन्" । यात्रीले फेरी सोधे "यस्तो अवस्थामा तिम्रो जीवन कसरी चलिरहेछ त ?" । ब्राह्मणले जवाफ दिए "म विषमा पर्ने कीरा जस्तै हुँ, विषमै पैदा भएर पनि विषले त्यसलाई गर्दैन । यसरी म मानिससँग जीवन बिताइरहेछु" ।



### मसानतुल्य घर

**न विप्रपादोदककर्दमानि न वेदशास्त्रध्वनिगर्जितानि ।**
**स्वाहास्वधाकारविवर्जितानि श्मशानतुल्यानि गृहाणि तानि ॥१०॥**

जुन घरमा ब्राह्मणका पाउ धोएर हिलो भएको हुँदैन, जहाँ वेद आदि शास्त्र पाठ गरिँदैन, जहाँ स्वाहा र स्वधाको उच्चारण हुँदैन, त्यो घर मसानतुल्य हुन्छ ।

### असली नाता

**सत्यं माता पिता ज्ञानं धर्मो भ्राता दया सखा ।**
**शान्तिः पत्नी क्षमा पुत्रः षडेते ममबान्धवाः ॥११॥**

(एक गृहस्थलाई एक साधुले सोधे "तिमी कसरी यति खुशी हुन सक्यौ को को छन् तिम्रा नातेदार?" । तब ती गृहस्थले भने-) । सत्य मेरी आमा हुन् । धर्म मेरा दाजु हुन् । दया मेरा मित्र हुन् ।

शान्ति मेरी पत्नी हुन् । क्षमा र सहनशीलता मेरा दुई पुत्र हुन् । यिनै छ जना मेरा परिवारका सदस्य हुन्, मेरा बन्धुबान्धव र मेरा आफन्त हुन्

**धर्म**

**अनित्यानि शरिराणि विभवो नैव शाश्वतः ।**
**नित्यं सन्निहितो मृत्युः कर्तव्यो धर्मसङ्ग्रहः ॥१२॥**

शरीर नाशवान् छ, धन पनि सधैँ कसैका साथमा रहँदैन, सबैले यो संसारलाई एकदिन छाड्नै पर्दछ, यसैले हरेक व्यक्तिले धर्म गर्नुपर्दछ ।

**उत्सव**

**निमन्त्रणोत्सवा विप्रा गावो नवतृणोत्सवाः ।**
**पत्युत्साहयुता भार्या अहं कृष्णरसोत्सवः ॥१३॥**



कुनै ब्राह्मणका लागि कतैबाट भोजनको निम्ता आउनु नै उत्सव हो । गाईका लागि ताजा नयाँ घाँस खान पाउनु उत्सव हुन्छ । पतिमा उत्साह बढिरहनु नै स्त्रीका लागि उत्सव हुन्छ । मेरा लागि श्रीकृष्णको चरणमा हुने प्रेम नै उत्सव हो ।

**परस्त्री**

**मातृवत्परदारांश्च परद्रव्याणि लोष्ठवत् ।**
**आत्मवत्सर्वभूतानि यः पश्यति स पण्डितः (पश्यति) ॥१४॥**

पराया स्त्रीहरूलाई आमासमान ठान्ने, अर्काको धनलाई माटाको डल्लासरह मान्ने र संसारका सबै जीवलाई आफ्नो आत्मासरह मान्ने व्यक्ति नै पण्डित हुन्छ ।

**सज्जनका गुण**

**धर्मे तत्परता मुखे मधुरता दाने समुत्साहता**

**मित्रेऽवञ्चकता गुरौ विनयता चित्तेऽति गम्भीरता ।**
**आचारे शुचिता गुणे रसिकता शास्त्रेषु विज्ञातृता**
**रूपे सुन्दरता शिवे भजनता सत्स्वेव संदृश्यते (त्वय्यस्ति भो राघव) ॥१५॥**

धर्ममा निरन्तर लागिरहनु, मुखले मिठो वचन बोल्नु, दान दिनमा उत्सुक हुनु, मित्रप्रति कुनै छलछाम नगर्नु, गुरुप्रति नम्र हुनु, मनमा गम्भिरता हुनु, आचरणमा पवित्रता हुनु, असल गुण ग्रहण गर्न रुचि हुनु, शास्त्रमा विशेष ज्ञान हुनु, रूपवान् हुनु, सुन्दर हुनु र ईश्वरमा भक्ति हुनु : यी गुण सज्जन व्यक्तिमा देखिन्छन् ।

**प्रभू स्तुति**

**काष्ठं कल्पतरुः सुमेरुरचलश्चिन्तामणिः प्रस्तरः**
**सूर्यस्तीव्रकरः शशी क्षयकरः क्षारो हि वारान्निधिः ।**
**कामो नष्टतनुर्बलिर्दितिसुतो नित्यं पशुः कामगौ-**
**र्नौस्तांस्ते तुलयामि भो रघुपते कस्योपमा दीयते ॥१६॥**



कल्पवृक्ष एउटा काठ हो, सुमेरु एक पर्वत हो, चिन्तामणि एक पत्थर हो, सूर्यले प्रचण्ड घाम दिन्छन्, चन्द्रमा खिइने गर्दछन्, समुद्रको पानी नुनिलो हुन्छ, कामदेवको कुनै शरीर छैन, दानशील बलि दानब हुन्, कामधेनु एक पशु हुन् । तर म यी कसैलाई पनि हजुर समान मान्दिन । हे प्रभु राम ! हजुरको तुलना कोसँग गर्नु ? हजुर अतुलनीय हुनु हुन्छ ।

**मित्र**

**विद्या मित्रं प्रवासे च भार्या मित्रं गृहेषु च ।**
**व्याधितस्यौषधं मित्रं धर्मो मित्रं मृतस्य च ॥१७॥**

विदेशमा हुँदा विद्या, घरमा हुादा पत्नी, रोगलाग्दा औषधी र मरेपछि धर्म मित्र हुन्छन् ।

**ज्ञान सिक्ने कार्य**

**विनयं राजपुत्रेभ्यः पण्डितेभ्यः सुभाषितम् ।**

**अनृतं द्यूतकारेभ्यः स्त्रीभ्यः शिक्षेत कैतवम् ॥१८॥**

राजकुमारहरूबाट नम्रता, पण्डितहरूबाट परम्परागत ज्ञानगुनका कुरा, जुवाडेहरूबाट झुटो बोल्न र स्त्रीहरूबाट छलकपट सिक्नू ।

### चाँडै नाश हुने व्यक्ति

**अनालोक्य व्ययं कर्ता अनाथः कलहप्रियः ।**
**आतुरः सर्वक्षेत्रेषु नरः शीघ्रं विनश्यति ॥१९॥**

जो मानिस सोचविचार नगरी धेरै खर्च गर्दछ, कमजोर भएर पनि जो झैझगडा गर्न रुचि गर्दछ अनि जो सबै खालका स्त्रीहरूसँग सहवास गर्न उत्ताउलो हुन्छ, उ चाँडैनै नष्ट हुन्छ ।

### धर्म

**नाहारं चिन्तयेत्प्राज्ञो धर्ममेकं हि चिन्तयेत् ।**

**आहारो हि मनुष्याणां जन्मना सह जायते ॥२०॥**

बुद्धिमानले के खाने होला भनेर खानेकुराको चिन्ता नगर्नू, धर्मकर्मको मात्र चिन्ता गर्नू किन कि आहार त जन्मदेदेखि (ईश्वरबाट) सुनिश्चित गरिएको हुन्छ ।

### लाज

**धनधान्यप्रयोगेषु विद्यासङ्ग्रहणे तथा ।**
**आहारे व्यवहारे च त्यक्तलज्जः सुखी भवेत् ॥२१॥**

धन वा अनाजको व्यवहार गर्दा, विद्या कमाउँदा, खाँदा र व्यवहार मिलाउँदा कहिल्यै पनि लाज नमान्नू ।

विस्तारै धर्म गर्नू

**जलबिन्दुनिपातेन क्रमशः पूर्यते घटः ।**
**स हेतु सर्वविद्यानां धर्मस्य च धनस्य च ॥२२॥**

जसरी थोपा थोपा खसी जम्मा हुँदै गाग्रो भरिन्छ त्यसरी नै जम्मा पार्नाले धन, विद्या र धर्म प्राप्त हुन्छ ।

दुष्टको स्वभाव बदलिँदैन

**वयसः परिणामेऽपि यः खलः खलः एव सः ।**
**सम्पक्वमपि माधुर्यं नोपयातीन्द्रवारुणम् ॥२३॥**

जसरी ऐरेलुविशेषको फल पाकेपछि पनि मिठो हुँदैन त्यसरी नै दुष्ट व्यक्ति पाको हुँदा पनि दुष्ट नै हुन्छ ।



**॥ इति द्वादशोऽध्यायः ॥**

॥ बाह्रौं अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

## ॥ अथ त्रयोदशोऽध्यायः ॥
(तेह्रौं अध्याय)

### पुण्य गर

**मुहूर्त्तमपि जीवेच्च नरः शुक्लेन कर्मणा ।**
**न कल्पमपि कष्टेन लोकद्वयविरोधिना ॥१॥**

अठचालीस मिनेटको मात्र आयु भएपनि मानिसले पुण्य कर्म गरेर बिताउनु पर्दछ । एक कल्पकै आयु भएपनि दुष्टकर्म गरेर बिताउनु व्यर्थ हुन्छ ।

### वर्तमानलाई प्राथमिकता देऊ

**गते शोको न कर्तव्यो भविष्यं नैव चिन्तयेत् ।**
**वर्तमानेन कालेन प्रवर्त्तन्ते विचक्षणाः ॥२॥**



बितेका कुरामा शोक र भविष्यको लागि चिन्ता नगर्नू । बुद्धिमान् मानिस वर्तमान समय अनुसारका कार्य गर्न तल्लीन हुन्छन् ।

### को के गर्दा खुशी हुन्छ ?

**स्वभावेन हि तुष्यन्ति देवाः सत्पुरुषाः पिता ।**
**ज्ञातयः स्नानपानाभ्यां वाक्यदानेन पण्डिताः ॥३॥**

देवता, सत्पुरुष र पिता स्वभावले; बन्धुबान्धव मिठो खानपिनले तथा विवेकशील पण्डित मिठो वचनले नै प्रसन्न हुन्छन् ।

### गर्भमै निश्चित हुने कुराहरू

**आयुः कर्म च वित्तञ्च विद्या निधनमेव च ।**
**पञ्चैतानि च सृज्यन्ते गर्भस्थस्यैव देहिनः ॥४॥**

आयु, कर्म, धन, विद्या र मृत्यु : यी पाँच कुरा मानिस गर्भमै हुँदा सुनिश्चित हुने गर्दछ ।

### सन्त र धन

**अहो वत विचित्राणि चरितानि महात्मनाम् ।**
**लक्ष्मी तृणाय मन्यन्ते तद्भारेण नमन्ति च ॥५॥**

महात्माहरूको चरित्र पनि अचम्मको हुन्छ । धनसम्पत्तिलाई छेस्को बराबर ठान्दछन् तर जब यो आफूलाई प्राप्त हुन्छ तब त्यसको बोझले निहुरिन्छन् ।

### माया नै दु:खको जड हो

**यस्य स्नेहो भयं तस्य स्नेहो दु:खस्य भाजनम् ।**
**स्नेहमूलानि दु:खानि तानि त्यक्त्वा वसेत्सुखम् ॥६॥**



जसलाई कसैप्रति माया हुन्छ उसैलाई डर पनि हुन्छ । माया नै दु:खको आधार हो । यसैले मायाममता त्यागी सुखपूर्वक बस्न प्रयाश गर्नू ।

### सावधान हुनेले दु:ख पाउँदैन

**अनागतविधाता च प्रत्युत्पन्नमतिस्तथा ।**
**द्वावेतौ सुखमेधेते यद्भविष्यो विनश्यति ॥७॥**

सम्भावित दु:खलाई हटाउन वा कम गर्न पहिले नै उपाय निकाल्ने तथा विपद् आउँदा तुरुन्त उपाय निकाल्ने व्यक्तिलाई सुख बढ्दछ । भाग्यले जे गर्दछ गर्दछ भनी बस्ने मानिस अवश्य नष्ट हुन्छ ।

### राजा र प्रजा

**राज्ञधर्मिणि धर्मिष्ठाः पापे पापाः समे समाः ।**
**राजानमनुवर्त्तन्ते यथा राजा तथा प्रजाः ॥८॥**

राजा धर्मात्मा भए प्रजा पनि धर्मात्मा हुन्छन् । यदि उ पापी हुन्छ भने ती पनि पापी हुन्छन् । सबै प्रजा राजा अनुसार नै व्यवहार गर्दछन् । जस्तो राज त्यस्तै प्रजा हुन्छन् ।

### व्यर्थको जीवन

**जीवन्तं मृतवन्मन्ये देहिनं धर्मवर्जितम् ।**
**मृतो धर्मो संयुक्तो दीर्घजीवी न संशयः ॥९॥**

धर्महीन भएर बाँच्नेलाई म मरेसरह मान्दछु । निश्चय नै धर्मले युक्त मानिस मरेपनि लामो समयसम्म बाँचिरहन्छ ।

**धर्मार्थकाममोक्षाणां यस्य कोऽपि न विद्यते ।**
**अजागलस्तनस्येव तस्य जन्म निरर्थकम् ॥१०॥**

धर्म, अर्थ, काम र मोक्ष मध्ये कुनै पनि गुण नहुने मानिसको जन्म बाख्राका गलामा पलाउने थुनको जस्तै निरर्थक हुन्छ ।



### दुर्जनको स्वभाव

**दह्यमानाः सुतीव्रेण नीचाः परयशोऽग्निना ।**
**अशक्तास्तत्पदं गन्तुं ततो निन्दां प्रकुर्वते ॥११॥**

दुर्जनहरू अर्काको कीर्तिरूपी असहनीय अग्निले जली उसको जस्तो सफलता पाउन सक्दैनन् त्यसैले उसको आलोचना गर्न थाल्दछन् ।

### मनको भूमिका

**वन्धायविषयासङ्गोमुक्तौर्निविषयं मनः ।**
**मन एव मनुष्याणां कारणं बन्धमोक्षयोः ॥१२॥**

विषयमा बाँधिएको मन बन्धनको कारण हो । मनुष्यलाई बन्धनमा राख्ने वा मोक्ष दिने कारण मन नै हो ।

### परमात्मा

**देहाभिमाने गलिते ज्ञानेन परमात्मनः ।**
**यत्र यत्र मनो याति तत्र तत्र समाधयः ॥१३॥**

परमात्माको ज्ञान भएपछि शरीरको अभिमान नाश भई जहाँ जहाँ  मन जान्छ त्यहाँ त्यहाँ समाधि हुने गर्दछ ।

### सन्तोष

**ईप्सितं मनसः सर्वं कस्य सम्पद्यते सुखम् ।**
**दैवायत्तं यतः सर्वं तस्मात्सन्तोषमाश्रयेत् ॥१४॥**



मनले सोचे जस्तो सुख कसलाई पो मिल्दछ र ? सबै कुरा ईश्वरको नियन्त्रणमा हुन्छ । त्यसैले सन्तोष गर्नु पर्दछ ।

### कर्म भोग

**यथा धेनु सहस्रेषु वत्सो गच्छति मातरम् ।**
**तथा यच्चकृतं कर्म कर्त्तारमनुगच्छति ॥१५॥**

जसरी हजारौं गाईको बथानमा पनि बाच्छोले आफ्नी आमालाई चिनेर नगिचै जान्छ त्यसरी नै कर्म पनि कर्तालाई चिनेर नगिचै जाने गर्दछ ।

### धैर्यता

**अनवस्थित कार्यस्य न जने न वने सुखम् ।**
**जनो दहति संसर्गाद्वनंसङ्गविवर्जनात् ॥१६॥**

स्थिर कर्म नगर्ने व्यक्तिले समाजमा वा वनमा कतै पनि सुख पाउँदैन । समाजको सङ्गतले उसलाई पोल्दछ भने वनमा सङ्गत नपाउनाले पोल्दछ ।

### विद्या

**यथा खात्वा खनित्रेण भूतले वारि विन्दति ।**
**तथा गुरु गतां विद्यां शुश्रूषुरधिगच्छति ॥१७॥**

जसरी खन्ती आदिले खन्दै जाँदा पातालको पानी पनि भेटिने गर्दछ त्यसरी नै गुरुमा भएको विद्यापनि शिष्यले पाउने गर्दछ ।

### विचार गरी काम गर्नू

**कर्मायत्तं फलं पुंसां बुद्धिः कर्मानुसारिणी ।**
**तथापि सुधियश्चार्याः सुविचार्यैव कुर्वते ॥१८॥**



फल मानिसको कर्मका अधिनमा र बुद्धि कर्म अनुसार चल्ने भएपनि विवेकशील महात्माहरू विचार गरेर मात्र काम गर्ने गर्दछन् ।

### सन्तोष र असन्तोष

**सन्तोषस्त्रिषुकर्तव्यः स्वदारेभोजने धने ।**
**त्रिषुचैव न कर्तव्योऽध्ययनेजपदानयोः ॥१९॥**

स्त्री, भोजन र धनमा सन्तोष लिनू तर अध्ययन, तपस्या र दानमा सन्तोष नलिनू ।

### गुरुभक्ति

**एकाक्षर प्रदातारं यो गुरुं नाभिवन्दते ।**
**श्वानयोनिशतं भुक्त्वा चाण्डालेष्वभिजायते ॥२०॥**

एक अक्षर मात्र पढाएका भएपनि जसले गुरुलाई अभिवादन गर्दैन उसले सय जन्मसम्म कुकुर र त्यसपछि चाण्डाल भएर जन्मनु पर्दछ ।

### स्थिरता

**युगान्ते प्रचलेन्मेरुः कल्पान्ते सप्तसागराः ।**
**साधवः प्रतिपन्नार्था नचलन्ति कदाचन॥२१॥**

युगको अन्तमा सुमेरु पर्वत सर्दछ, कल्पको अन्तमा सात वटै सागर सर्दछन् तर साधुजन स्वीकृत अर्थबाट कहिल्यै डेग चल्दैनन् ।

**॥ इति त्रयोदशोऽध्यायः ॥**

॥ तेह्रौं अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

# ॥ अथ चतुर्दशोऽध्यायः ॥
(चौधौं अध्याय)

### रत्न

**पृथिव्यां त्रीणि रत्नानि जलममन्नंसुभाषितम् ।**
**मूढैः पाषाणखण्डेषु रत्नसङ्ख्या विधीयते ॥१॥**

पृथ्वीमा पानी, अनाज र पूर्वजका प्रियवचनलाई रत्न भन्ने गरिन्छ तर मूर्खहरू पत्थरका टुक्रालाई रत्न मानेर गन्ने गर्दछन् ।

### अपराधको फल

**आत्मापराधवृक्षस्य फलान्येतानि देहिनाम् ।**
**दारिद्र्यरोगदुःखानि बन्धनव्यसनानि च ॥२॥**



जीवलाई आफ्नो अपराधरूपी वृक्षमा दरिद्रता, रोग, दुःख, बन्धन र विपत्ति फल्ने गर्दछ ।

### शरीरको महत्व

**पुनर्वित्तम्पुनर्मित्रं पुनर्भार्या पुनर्मही ।**
**एतत्सर्वं पुनर्लभ्यं न शरीरं पुनः पुनः ॥३॥**

धन फेरी आउँदछ, मित्र फेरी भेट्टिन्छन्, स्त्री पुनः पाइन्छ तर यो मनुष्यको चोला वा शरीर पुनः पुनः पाइँदैन ।

### सामूहिक प्रयाश

**बहुनां चैव सत्त्वानां समवायो रिपुञ्जयः ।**
**वर्षाधाराधरोमेघस्तृणैरपि निवार्यते ॥४॥**

धेरै जनाको सत्कर्म मिलेर शत्रुलाई परास्त गर्न सकिन्छ किन कि खर आदि घाँसपातको समूहले वर्षालाई छेक्ने वा हराउने गर्दछ ।

**यश**

**जलै तैलं खले गुह्यं पात्रे दानं मनागपि ।**
**प्राज्ञे शास्त्रं स्वयं याति विस्तारं वस्तुशक्तितः ॥५॥**

जलमा तेल, दुर्जनमा गोप्य कुरा, सत्पात्रमा दान र बुद्धिमानमा शास्त्र अलिकति परेपनि त्यसको प्रभावले त्यो कुरा आप से आप फैलने गर्दछ ।

**सोच र मोक्ष**

**धर्माख्याने श्मशाने च रोगिणां या मतिर्भवेत् ।**
**सा सर्वदैव तिष्ठेच्चेत्को न मुच्येत बन्धनात् ॥६॥**



धार्मिक प्रवचन सुन्दा, मलामी बनी घाटमा पुग्दा र रोग लाग्दा मानिसलाई धर्मका बारेमा जुन् बुद्धि आउने गर्दछ त्यही बुद्धि सधैं बसिरहे को चाहीँ मानिस मोक्ष नहोला र ?

**पछुतो**

**उत्पन्नपश्चात्तापस्थ बुध्दिर्भवति यादृशी ।**
**तादृशी यदि पूर्वं स्यात्कस्य स्यान्न महोदयः ॥७॥**

निन्दनीय कर्म गरेपछि पछुताउने मानिसलाई जेजस्तो बुद्धि पलाउँदछ त्यही बुद्धि पहिले नै पलाउने भए कसको चाहीँ समृद्धि हुने थिएन र ?

**विस्मय**

**दाने तपसि शौर्ये वा विज्ञाने विनये नये ।**
**विस्मयो न हि कर्तव्यो बहुरत्ना वसुन्धरा ॥८॥**

दानमा, तपस्यामा, वीरतामा, ज्ञानमा, सुशीलतामा र नीतिमा विस्मय वा पछुतो नमान्नू किन कि पृथ्वीमा अनेकौँ रत्न हुन्छन् ।

**मन**

**दूरस्थोऽपि न दूरस्थो यो यस्य मनसि स्थितः ।**
**यो यस्य हृदये नास्ति समीपस्थोऽपि दूरतः ॥९॥**

जो जसको मनमा बसेको हुन्छ उ टाढा भएपनि नजिकै हुन्छ । अनि जो जसको मनमा बसेको हुँदैन उ नजिकै भएपनि टाढा हुन्छ ।

**मिठो बोली**

**यस्माच्च प्रियमिच्छेत्तु तस्य ब्रूयात्सदा प्रियम् ।**
**व्याधो मृगवधं गन्तुं गीतं गायति सुस्वरम् ॥१०॥**



जसलाई अरुबाट राम्रो व्यवहारको आश हुन्छ उसले उसँग सधैं मिठो वचन बोल्ने गर्नुपर्दछ । मृगको शिकार गर्न हिँडेको शिकारी उसलाई मार्न पनि मिठो गीत गाउने गर्दछ ।

**मध्यम दूरी राख्नुपर्ने कुरा**

**अत्यासन्ना विनाशाय दूरस्था न फलप्रदाः ।**
**सेव्यतां मध्यभागेन राजावह्निगुरुस्त्रियः ॥११॥**

राजा, आगो, गुरु र स्त्री यी धेरै नजिक भएभने आफ्नै विनाशको कारण बन्दछन् । यी टाढा भएपनि कुनै फाइदा लिन पाइँदैन । त्यसैले यीसँग मध्यम दूरी कायम गर्नू ।

**शतर्क भएर सेवन गर्नुपर्ने कुरा**

**अग्निरापः स्त्रियो मूर्खाः सर्पो राजकुलानि च ।**

**नित्यं यत्नेन सेव्यानि सद्यः प्राणहराणि षट् ॥१२॥**

आगो, पानी, स्त्री, मूर्ख, सर्प र राजखलक : यी छ कुरा जहिले पनि सावधान भएर सेवन गर्न योग्य हुन्छन् । अलिकति असाबधान हुनासाथ इनले आफ्नो ज्यान लिन्छन् ।

### व्यर्थको जीवन

**स जीवति गुणा यस्य यस्य धर्मः स जीवति ।**
**गुणधर्मविहीनस्य जीवितं निष्प्रयोजनम् ॥१३॥**

त्यसैले बाँचेको ठहर्दछ जोसँग केही गुण वा धर्म हुन्छ । धर्म र गुण दुवै नहुने मानिस बाँच्नु व्यर्थ हुन्छ ।

### इन्द्रिय नियन्त्रण

**यदिच्छसि वशीकर्तुं जगदेकेन कर्मणा ।**

**पुरः पञ्चदशास्येभ्यो गां चरन्तीं निवारय ॥१४॥**

यदि संसारलाई एउटै कर्म गरी वशमा पार्न चाहन्छौ भने आँखा, कान, नाक, जिभ्रो, छाला, मुख, हात, गोडा, जननेन्द्रिय, मलद्वार, शब्द, स्पर्श, रस, रूप र गन्ध गरी पन्ध्र कुरालाई मनले नियन्त्रण गर ।

### समय अनुसार चल

**प्रस्तावसदृशं वाक्यं प्रभावसदृशं प्रियम् ।**
**आत्मशक्तिसमं कोपं यो जानाति स पण्डितः ॥१५॥**

प्रसङ्ग अनुसारका वाक्य, प्रभाव अनुसारका प्रिय कुरा र आफ्नो शक्ति अनुसारको रिस गर्न जो जान्दछ त्यो नै पण्डित हो ।

**दृष्टिकोणमा भिन्नता**

**एकएव पदार्थस्तु त्रिधा भवति वीक्षितः ।**
**कुणपः कामिनी मांसं योगिभिः कामिभिः श्वभिः ॥१६॥**

एउटै शरीर भएका कुरालाई पनि तीन थरी देखिने गर्दछ । योगिजन त्यसलाई अति निन्दनीय लाशका रूपमा, कामी पुरुष प्रियाका रूपमा र कुकुर मासुका रूपमा लिने गर्दछ ।

**अरुलाई बताउन नहुने कुरा**

**सुसिद्धमौषधं धर्मं गृहच्छिद्रं च मैथुनम् ।**
**कुभुक्तं कुश्रुतं चैव मतिमान्न प्रकाशयेत् ॥१७॥**

फाइदा गरिरहेको ओखती, धर्म, आफ्नो घरको दोष, सहवास, कुअन्न खाएका कुरा र निन्दनीय वचनका बारेमा अरुलाई नबताउनु नै बुद्धिमानी हुन्छ ।



**बोली वचन**

**तावन्मौनेन नीयन्ते कोकिलैश्चैव वासराः ।**
**यावत्सर्वजनानन्ददायिनी वाक् प्रवर्तते ॥१८॥**

कोइली तबसम्म चूपचाप बस्दछ जबसम्म सबैलाई आनन्द दायक बोली प्रकट हुँदैन ।

**सुप्रयोग**

**धर्मं धनं च धान्यं च गुरोर्वचनमौषधम् ।**
**सुगृहीतं च कर्त्तव्यमन्यथा तु न जीवति ॥१९॥**

धर्म, धन, अनाज, गुरुको वचन र ओखती यदि राम्ररी लिइएको छ भने यसलाई राम्ररी प्रयोग गर्नुपर्दछ । जसले यसरी प्रयोग गर्दैन उसले ज्यान गुमाउँदछ ।

**धर्मकर्म**

**त्यज दुर्जनसंसर्गं भज साधुसमागमम् ।**
**कुरु पुण्यमहोरात्रं स्मर नित्यमनित्यतः ॥२०॥**

दुर्जनको सङ्गत छाड, साधुजनको सङ्गत गर, दिनरात पुण्यकर्म गर अनि हरपल ईश्वरलाई सम्झने गर किन कि यो संसार सधैँ टिक्दैन ।

**॥ इति चतुर्दशोऽध्यायः ॥**

॥ चौधौँ अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

## ॥ अथ पञ्चदशोऽध्यायः ॥
(पन्ध्रौं अध्याय)

### मोक्ष हुने लक्षण

**यस्य चित्तं द्रवीभूतं कृपया सर्वजन्तुषु ।**
**तस्य ज्ञानेन मोक्षेण किं जटाभस्मलेपनैः ॥१॥**

जसको मन सबै प्राणीमाथि दया गर्दै पग्लने गर्दछ उसलाई ज्ञान, मोक्ष, जटा पाल्न र खरानी घस्न किन पर्दछ र ? (उ स्वतः मोक्ष हुन्छ) ।

### गुरु दक्षिणा

**एकमेवाक्षरं यस्तु गुरुः शिष्यं प्रबोधयेत् ।**
**पृथिव्यां नास्ति तद्द्रव्यं यद् दत्त्वा चानृणी भवेत् ॥२॥**



एक अक्षर मात्र ज्ञान दिने गुरुको ऋणबाट मुक्त हुन उनलाई दिने शिष्यसँग यो पृथ्वीमा कुनै पदार्थ नै छैन ।

### दुष्ट र काँडा

**खलानां कण्टकानां च द्विविधैव प्रतिक्रिया ।**
**उपानन्मुखभङ्गो वा दूरतैव विसर्जनम् ॥३॥**

दुष्ट र काँडालाई दुई किसिमका नै प्रतिक्रिया देखाउनु पर्दछ । कि जुत्ताले हानेर घोच्ने मुख भाँच्नू होइन भने परैबाट तर्कनू ।

### लक्ष्मी नाश हुने कुरा

**कुचैलिनं दन्तमलोपधारिणां बह्वाशिनंनिष्ठुरभाषिणां च ।**
**सूर्योदये वाऽस्तमिते शयानं विमुञ्चति श्रीर्यदि चक्रपाणिः ॥४॥**

मैला लुगा लगाउने, दाँत सफा नगर्ने, धेरै खाने, कठोर वचन बोल्ने अनि सूर्य उदाउँदा र अस्ताउँदा सुत्नेलाई चाहे ती भगवान् विष्णु नै किन नहुन् लक्ष्मीले परित्याग गर्दछिन् ।

**धनको महत्व**

**त्यजन्ति मित्राणि धनैर्विहीनं दाराश्च भृत्याश्च सुहृज्जनाश्च ।**
**तं चार्थवन्तं पुनराश्रयन्तेऽतोर्थो हि लोके पुरुषस्य बन्धुः ॥५॥**

धन नभएका मानिसदाई मित्र, पत्नी, सेवक र आफन्तजनले पनि छोड्न थाल्दछन् । पुनः धनी भए ती सबै पुनः घुस्रिन आउँदछन् । यसैले धन पो लोकमा बन्धु रहेछ जस्तो लाग्दछ ।

**अन्यायले कमाएको धनको आयु**

**अन्यायोपार्जितं द्रव्यं दश वर्षाणि तिष्ठति ।**
**प्राप्ते एकादशे वर्षे समूलं च विनश्यति॥६॥**

अन्यायपूर्वक कमाइएको धन दश वर्षसम्म रहन्छ, एघार वर्ष लागेपछि यो जरै सहित नष्ट हुन्छ वा हुन थाल्दछ ।

**योग्य व्यक्तिको हातमा परेपछि हरेक कुरा उपयोगी हुन्छ**

**अयुक्तं स्वामिनो युक्तं युक्तं नीचस्य दूषणम् ।**
**अमृतं राहवे मृत्युर्विषं शंकरभूषणम्॥७॥**

कामै नलाग्ने वस्तु पनि गतिलो मान्छेको हातमा परेपछि काम लाग्ने बन्दछ । अनि काम लाग्ने कुरा पनि काम नलाग्ने बन्दछ । अमृतले राहुको ज्यान लियो उता अर्कोतिर कालकूट विष पनि भगवान् शङ्करका लागि गहना भयो ।

भोजन, मित्रता, बुद्धिमानी र धर्म

**तद्भोजनं यद् द्विजभुक्तशेषं तत्सौहृदं यत्क्रियते परस्मिन् ।**
**सा प्राज्ञता या न करोति पापं दम्भं विना यः क्रियते स धर्मः ॥८॥**

ब्राह्मणलाई खुवाएर बाँकी रहेको भोजन नै भोजन हो । अरुलाई गरिने नै मित्रता हो । पाप नगर्नु भनेकै बुद्धिमानी हो । घमण्ड नगरी गरिने कर्म नै धर्म हो ।

समय आएपछि सत्य कुरा बाहिरिन्छ

**मणिर्लुण्ठति पादाग्रे काचः शिरसि धार्यते ।**
**क्रय विक्रयवेलायां काचः काचो मणिर्मणिः ॥९॥**

मणिलाई गोडामा र सिसालाई टाउकामा लगाइएको भएपनि जब किनबेचको समय आउँदछ तब काँच काँचकै थान्कोमा र मणि मणिकै थान्कोमा पुग्दछ ।



शास्त्रका सार कुरा ग्रहण गर्नू

**अनन्तंशास्त्रं बहुलाश्च विद्याः अल्पश्च कालो बहुविघ्नता च ।**
**यत्सारभूतं तदुपासनीयं हंसो यथा क्षीरमिवाम्बुमध्यात् ॥१०॥**

शास्त्र अनन्त छन्, विद्या पनि अति नै धेरै छन् । समय कम छ अनि बाधाव्यवधान धेरै आउँदछन् । त्यसैले हाँसले जलबाट दूध छाने जसरी सार ग्रहण गर्नुपर्दछ ।

अतिथि पूजा

**दूरागतं पथि श्रान्तं वृथा च गृहमागतम् ।**
**अनर्चयित्वा यो भुङ्क्ते स वै चाण्डाल उच्यते ॥११॥**

टाढाबाट आएको, हिँड्दा हिँड्दा थाकेको र बिना कुनै काम घरमा टुप्लुक्क आइपुगेको अतिथिलाई पूजा नगरी जसले खान्छ त्यसलाई पनि चाण्डाल नै भनिन्छ ।

### आत्मज्ञान

पठन्ति चतुरो वेदान् धर्मशास्त्राण्यनेकशः ।
आत्मानं नैव जानन्ति दर्वी पाकरसं यथा ॥१२॥

चारै वेद र अनेकौं धर्मशास्त्र पढेर पनि मानिस डाडुले खानेकुराको स्वाद नपाए जसरी आत्मालाई थाहा पाउँदैनन् ।

### ब्राह्मण

धन्या द्विजमयि नौका विपरीता भवार्णवे ।
तरन्त्यधोगताः सर्वे उपरिस्थाः पतन्त्यधः ॥१३॥

त्यो ब्राह्मणरूपी डुङ्गा धन्य छ, संसाररूपी समुद्रमा यसको उल्टो चाल हुने गर्दछ, उसका तल बस्नेजति संसार तर्दछन् र उसका माथि हुनेहरू तल खस्दछन् ।



### अर्काको घरमा गरिने वास

अयममृतनिधानं नायकोऽप्यौषधीना
ममृतमयशरीरः कान्तियुक्तोऽपि चन्द्रः ।
भवति विगतरश्मिर्मण्डलं प्राप्य भानोः
परसदननिविष्टः को लघुत्वं न याति ॥१४॥

अमृतको घर, औषधीका मालिक, अमृतमय शरीर र शोभायुक्त चन्द्रमा पनि सूर्यको तेजमण्डलमा पुगेपछि तेजहीन हुन पुग्दछन् । अर्का घरमा गएपछि लघुताको आभाष नहुने को होला र ?

### अभावमा हुने महत्व

अलिरयं नलिनीदलमध्यगः कमलिनीमकरन्दमदालसः ।

विधिवशात्परदेशमुपागतः कुटजपुष्परसं बहु मन्यते ॥१५॥

त्यो भमरो कमलको फूलका पत्तीका बीचमा बसेर त्यसैको रस खाँदै अल्छी भइरहने गर्दथ्यो । अब अहिले भाग्यवश परदेशमा आएर ठूलोकुरो (बूटीविशेष) को फूलको रस पाउँदा पनि गर्व गर्न थालेको छ ।

### लक्ष्मीका कुरा

पीतोगस्त्येन तातश्चरणतलहतो वल्लभोऽन्येन रोषा-
दाबाल्याद्विप्रवर्यैः स्ववदनविवरे धार्यते वैरिणी मे ।
गेहं मे छेदयन्ति प्रतिदिवसमुमाकान्तपूजानिमित्तं
तस्मात्खिन्नावदाहंद्विजकुलसदनं नाथ नित्यं त्यजामि ॥१६॥

अगस्ति ऋषि (ब्राह्मण) ले मेरा पिता (समुद्र) लाई पिइदिए । भृगुऋषि (ब्राह्मण) ले रिसाउँदै आएर मेरा पति (विष्णु) लाई छातीमा लात्तले हाने । यी (ब्राह्मणहरू) मेरी शत्रू (सरस्वती) लाई मुखमा राख्दछन् । यी (ब्राह्मण) हरेक दिनजसो पार्वतीका पतिको पूजाका लागि भनेर मेरो घर (कमलको फूल) चुँड्दछन् । त्यसैले हे नाथ (विष्णु) ! म खिन्न भएर ब्राह्मणका घरलाई सधैं नै त्याग गर्ने गर्दछु ।



### क्षमताको सीमितता

बन्धनानि खलु सन्ति बहूनि प्रेमरज्जुकृतबन्धनमन्यत् ।
दारुभेदनिपुणोऽपि षडङ्घ्रिः निष्क्रियो भवति पङ्कजकोशे ॥१७॥

अनेकौं थरी बन्धनमध्ये प्रेमको बन्धन बलियो हुन्छ । काठमा प्वाल पार्न सक्ने क्षमता भएर के गर्नु ? भमरो कमलको फूलभित्र गएर थुनिने गर्दछ ।

### गुण छाडिन्न

छिन्नोऽपि चन्दनतरुर्न जहाति गन्धं वृद्धोऽपि वारणपतिर्न जहाति लीलाम् ।
यन्त्रार्पितो मधुरतां न जहाति चेक्षुः क्षीणोऽपि न त्यजति शीलगुणान् कुलीनः ॥१८॥

काटिएको चन्दनको रूखले पनि बास्नालाई त्याग गर्दैन । बूढो भएपनि हात्तीले रासलिला गर्न छाड्दैन । कोलमा पेलिएको उखुले पनि गुलियोपन छाड्दैन । यसरी नै दरिद्र हुँदा पनि कुलीनले सुशीलता आदि गुण छाड्दैन ।

**पुण्य र यश**

**उर्व्यां कोऽपि महीधरो लघुतरो दोर्भ्यां धृतो लीलया**
**तेन त्वं दिवि भूतले च सततं गोवर्द्धनोद्धारकः ।**
**त्वां त्रैलोक्यधरं वहामि कुचयोरग्रेण तद्गण्यते**
**किं वा केशवभाषणेन बहुना पुण्यैर्यशो लभ्यते ॥१९॥**

पृथ्वीमा रहेको एउटा हत्यन्त हलुका पर्वत उचालेका कारण हजुरलाई स्वर्ग र पृथ्वीमा गोवर्द्धनधारी भन्ने गरिन्छ । तीन वटै लोकलाई धारण गर्ने हजुरलाई कुचको टुप्पोमा धारण गर्दछु, तर यसका बारेमा कसैले केही भन्दैन । हे केशव ! धेरै कुरा के गर्नु ? पुण्यले नै यश मिल्दछ ।



**॥ इति पञ्चदशोऽध्यायः ॥**

॥ पन्ध्रौं अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

## ॥ अथ षोडशोऽध्यायः ॥

(सोह्रौं अध्याय)

### आत्मालोचना

न ध्यातं पदमीश्वरस्य विधिवत्संसारविच्छित्तये
स्वर्गद्वारकपाटपाटनपटुर्धर्मोऽपि नोपार्जितः ।
नारीपीनपयोधरोरुयुगलं स्वप्नेऽपि नालिङ्गितं
मातुः केवलमेव यौवनवनच्छेदे कुठारा वयम् ॥१॥

मोक्ष पाउनका लागि न मैले ईश्वरका चरणको ध्यान गरेँ, स्वर्गका ढोका फोर्न सक्षम हुने खालका न कुनै धर्म नै गरेँ नत मैले स्त्रीका तीखा कुचस्तन र जाँघलाई नै अँगाले, म त केवल आमाको वृक्षारूपी जवानी काट्ने बञ्चरो मात्रै पो भएछु ।

### स्त्री चरित्र



जल्पन्ति सार्धमन्येन पश्यन्त्यन्यं स विभ्रमाः ।
हृदये चिन्तयन्त्यन्यं न स्त्रीणामेकतो रतिः ॥२॥

एउटासँग गफ गर्दछे, अर्कोलाई विह्वल भएर हेर्दछे अनि मनले भने अर्कैका बारेमा सोच्दछे । स्त्रीहरूको कहिल्यै पनि एउटैमा माया स्थिर हुँदैन ।

### स्त्री र प्रेम

यो मोहान्मन्यते मूढो रक्तेयं मयि कामिनी ।
स तस्या वशगो भूत्वा नृत्येत् क्रीडाशकुन्तवत् ॥३॥

जसले मोहमा परी यो स्त्री मलाई प्रेम गर्दछे भनेर सम्झन्छ त्यो मूर्ख उनका वशमा परी खेलमा नचाइने चरा नाचेझैं नाचिरहन्छ ।

### सबैलाई यस्तो हुन्छ

**कोऽर्थान्प्राप्य न गर्वितो विषयिणः कस्यापदोऽस्तं गताः**
**स्त्रीभिः कस्य न खण्डितं भुवि मनः को नाम राजप्रियः ।**
**कः कालस्य न गोचरत्वमगमत्कोऽर्थी गतो गौरवं**
**को वा दुर्जनदुर्गुणेषु पतितः क्षेमेण यातः पथि ॥४॥**

पृथ्वीमा धन कमाएर फुर्ती नदेखाउने मानिस को छ ? कसको चाहीँ समस्या वा आपद् सबै सकिएका हुन्छन् र ? स्त्रीका कारण मन नकुँडिने मानिस को छ ? राजाको सधैं प्रिय भइरहने को छ ? सधैं बाँचिरहने को छ ? अनि धनले गर्दा महान् वा गौरवशाली भएको को छ ? अनि दुर्जनका दुर्गुणका पछि लागेर संसारको बाटो रामैरी हिँडेको को छ श्र (अर्थात् यस्तो कोही पनि छैन) ।

### विनाशकालमा विपरीत बुद्धि

**न निर्मिता केन न दृष्टपूर्वा न श्रूयते हेममयी कुरङ्गी ।**
**तथापि तृष्णा रघुनन्दनस्य विनाशकाले विपरीतबुद्धिः ॥५॥**



सुनको मृग न पहिले कसैले सृष्टि गरेका थिए, न पहिले कतै देखिएको थियो, न त यस्तो पनि मृग हुन्छ भनेर कसैले भनेको नै सुनिएको थियो । तैपनि भगवान् श्रीरामलाई सुनको मृगप्रति तृष्णा जाग्यो । विनाशको समय आएपछि बुद्धिले पनि उल्टो सोच्न थाल्दछ ।

### पद होइन गुण ठूलो

**गुणैरुत्तमतां याति नोच्चैरासनसंस्थिताः ।**
**प्रासादशिखरस्थोऽपि काकः किं गरुडायते ॥६॥**

प्राणी गुणले गर्दा श्रेष्ठ हुन्छ, ठुलो वा उच्च आसन वा पदमा बसेका भरमा श्रेष्ठ हुँदैन । दरबारको धुरीमा गएर बस्दैमा काग गरुड बन्दछ र ? बन्दैन नि ।

**गुणाः सर्वत्र पूज्यन्ते न महत्योऽपि सम्पदः ।**
**पूर्णेन्दुः किं तथा वन्द्यो निष्कलङ्को यथा कृशः ॥७॥**

सबैतिर गुणकै पूजा हुन्छ, अथाह सम्पत्तिको हुँदैन । द्वितीयाका दागरहित र दुर्बल चन्द्रमा पूर्णिमाका कलङ्क देखिने चन्द्रमाभन्दा बढी पूजिने गर्दछन् ।

### आत्मप्रशंसा

परस्तुतगुणौ यस्तु निर्गुणोऽपि गुणी भवेत् ।
इन्द्रोऽपि लघुतां याति स्वयं प्रख्यापितैर्गुणैः ॥८॥

जसका गुणका बारेमा अरुहरू बखान गर्ने गर्दछन् त्यो व्यक्ति गुणहीन नै भएपनि गुणवान् मानिने गर्दछ । आफ्ना गुणको आफैँले प्रशंसा गरे इन्द्र पनि अलोकप्रिय हुन पुग्दछन् ।

### सुनमा सुगन्ध

विवेकिनमनुप्राप्ता गुणा यान्ति मनोज्ञताम् ।
सुतरां रत्नमाभाति चामीकरनियोजितम् ॥९॥

विवेकी व्यक्तिलाई पाउँदा गुणमा पनि निखार आउँदछ, जब रत्नलाई सुनमा जडिन्छ तब त्यो अझ सुन्दर देखिने गर्दछ ।

### गुणको सम्मान

गुणैः सर्वज्ञतुल्योऽपि सीदत्येको निराश्रयः ।
अनर्घ्यमपि माणिक्यं हेमाश्रयमपेक्षते ॥१०॥

ईश्वरसमान गुनिलो व्यक्ति पनि एक्लै हुँदा दुःख पाउँदछ, बहुमूल्य माणिक्य पनि सुनमा जडिन पाइन्छ कि भनेर आश गरिरहन्छ ।

### अग्राह्य धन

अतिक्लेशेन ये अर्था धर्मस्याऽपि क्रमेण तु ।
शत्रूणां प्रणिपातेन ते अर्था मा भवन्तु मे ॥११॥

भगवान् भन्नुहुन्छ-अत्यन्त कष्टपूर्ण तरिकाले, धर्म त्यागेर र शत्रूलाई मारेर कमाइएको धन मलाई काम छैन ।

**किं तया क्रियते लक्ष्म्या या वधूरिव केवला ।**
**या तु वेश्येव सामान्या पथिकैरपि भुज्यते ॥१२॥**

दुलही जस्तो असाधारण अथवा जसले पनि भोग गर्नसक्ने वेश्या जस्तो साधारण धनले मानिसले के गर्नु ?

**धनेषु जीवितव्येषु स्त्रीषु चाहारकर्मसु ।**
**अतृप्ताः प्राणिनः सर्वे याता यास्यन्ति यान्ति च ॥१३॥**

धन, आयु, स्त्री र भोजनमा नअघाएर नै कति मानिस बिते अनि भविष्यमा पनि यसरी नै बितिरहने छन् ।



दानको महत्व

**क्षीयन्ते सर्वदानानि यज्ञहोमबलिक्रियाः ।**
**न क्षीयते पात्रदानमभयं सर्वदेहिनाम् ॥१४॥**

दान, यज्ञ, होम, बलि आदि जस्ता सबै कर्म खिइने गर्दछन् । तर सत्पात्रलाई दिइएको दान र सबै जीवलाई दिइएको अभयदान खिइँदैन ।

याचना गर्नु निकृष्ट कर्म हो

**तृणं लघु तृणात्तूलं तूलादपि च याचकः ।**
**वायुना किं न नीतोऽसौ मामयं याचयिष्यति ॥१५॥**

घाँसपात हलुको हुन्छ र त्योभन्दा पनि हलुको कपास हुन्छ । कपासभन्दा पनि हलुको मगन्ते हुन्छ । तै पनि हावाले यसलाई उडाएर किन लँदैन ? सायद हावा “यसले मसँग पनि माग्ला” भनेर सोच्दो हो ।

### अपमान

**वरं प्राणपरित्यागो मानभङ्गेन जीवनात् ।**
**प्राणत्यागे क्षणं दुःखं मानभङ्गे दिने दिने ॥१६॥**

अपमान सहेर बाँचिरहनु भन्दा प्राणत्याग गर्नु उत्तम हुन्छ । प्राणत्याग गर्दा एकछिन दुःख हुन्छ तर अपमानित हुँदा पल पल दुःख हुने गर्दछ ।

### मिठो बोली

**प्रियवाक्यप्रदानेन सर्वे तुष्यन्ति जन्तवः ।**
**तस्मात्तदेव वक्तव्यं वचने किं दरिद्रता ॥१७॥**

मिठो वचन बोल्नाले सबै जीव खुशी हुन्छन्, यसैले मिठो वचन नै बोल्नू । मिठो बोली बोल्नमा पनि किन दरिद्र हुनु ?

### मिठो बोली र सत्सङ्ग

**संसारकटुवृक्षस्य द्वे फले अमृतोपमे ।**
**सुभाषितं च सुस्वादु सङ्गतिः सुजने जने ॥१८॥**

संसाररूपी पिरो रूखमा रसिला प्रियवचन र सज्जनसँगको सङ्गत गरी दुई वटा फल मात्र फल्ने गर्दछ ।

### सत्कर्मको अभ्यास

**बहुजन्मसुचाभ्यस्तं दानमध्ययनं तपः ।**

**तेनैवाभ्यासयोगेन देहमभ्यस्यते पुनः ॥१९॥**

जन्मजन्मान्तरसम्म गरिने दान, अध्ययन र तपस्याको अभ्यासरूपी योगले पुनः पुनः यही अभ्यास गराउँदछ ।

पुस्तकभित्रको ज्ञान र अरुलाई दिइएको धन

**पुस्तकेषु च या विद्या परहस्तगतं धनम् ।**
**कार्यकाले समुत्पन्ने न सा विद्या न तद्धनम् ॥२०॥**

पुस्तकभित्र सीमित ज्ञान र अर्काको हातमा पुगेको धन आवश्यक पर्दा साथमा हुँदैनन् ।

**॥ इति षोडशोऽध्यायः ॥**

॥ सोह्रौं अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥

## ॥ अथ सप्तदशोऽध्यायः ॥
(सत्रौँ अध्याय)

### गुरु थापेर ज्ञान सिक्नू

**पुस्तकप्रत्ययाधीतं नाधीतं गुरुसन्निधौ ।**
**सभामध्ये न शोभेत जारगर्भा इव स्त्रियः ॥१॥**

गुरु नथापी स्वेच्छाले ग्रन्थ पढ्ने व्यक्ति सभामा व्यभिचारिणी गर्भवती जस्तै नसुहाने हुन्छ ।

### जस्तालाई त्यस्तै व्यवहार गर्नू

**कृते प्रतिकृतिं कुर्याद्धिंसने प्रतिहिंसनम् ।**
**तत्र दोषो न पतति दुष्टे दुष्टं समाचरेत् ॥२॥**

उपकारका बदलामा प्रत्युपकार, हिंसाका बदलामा प्रतिहिंसा र दुष्टसँग दुष्टकै जस्तो व्यवहार गर्दा कुनै दोष लाग्दैन ।

### तपस्या

**यद्दूरं यद्दुराराध्यं यच्च दूरे व्यवस्थितम् ।**
**तत्सर्वं तपसा साध्यं तपो हि दुरतिक्रमम् ॥३॥**

जुन कुरा पर छ, जसको आराधना हुन सक्दैन र जे कुरा वर्तमानमा पर छ ती सबै तपस्याबाट प्राप्त गर्न सकिन्छ, यसैले सबभन्दा बलियो तपस्या नै हो ।

### वास्तविक दोष, पाप आदि

**लोभश्चेदगुणेन किं पिशुनता यद्यस्ति किं पातकैः**
**सत्यं चेत्तपसा च किं शुचि मनो यद्यस्ति तीर्थेन किम् ।**
**सौजन्यं यदि किं गुणैः सुमहिमा यद्यस्ति किं मण्डनैः**

**सद्विद्या यदि किं धनैरपयशो यद्यस्ति किं मृत्युना ॥४॥**

लोभ गर्दछ भने अरु दोष के नै चाहियो र ? चुगलीखोर छ भने अरु पाप नै किन गर्नु पऱ्यो र ? सत्यता छ भने तप किन चाहियो ? मन सफा छ भने तीर्थ किन घुम्नु ? सज्जनता छ भने अरु गुण किन चाहियो ? महिमा छ भने आभूषण किन चाहियो ? राम्रो विद्या छ भने धन किन चाहियो ? अनि अपयश छ भने मृत्यु नै किन चाहियो ?

### कर्म

**पिता रत्नाकरो यस्य लक्ष्मीर्यस्य सहोदरा ।**
**शङ्खो भिक्षाटनं कुर्यान्न दत्तमुपतिष्ठते ॥५॥**

जसका पिता रत्नका खानि समुद्र छन्, लक्ष्मी जसकी बहिनी छिन्, त्यस्तो शङ्ख पनि भीक माग्दछ, कसैले नदिई केही पाउँदैन ।



### नसकेपछि मानिस साधु बन्दछ

**अशक्तस्तु भवेत्साधुर्ब्रह्मचारी व निर्धनः ।**
**व्याधिष्ठोदेवभक्तश्च वृद्धा नारी पतिव्रता ॥६॥**

मस्ति गलेपछि मानिस साधु हुन्छ । गरिब भएपछि ब्रह्मचारी हुन्छ । रोगले च्यापेपछि देवीदेवताको भक्त हुन्छ । बूढी भएपछि स्त्री पतिव्रता हुन्छे ।

### अतुलनीय कुरा

**नान्नोदकसमं दानं न तिथिर्द्वादशी समा ।**
**न गायत्र्याः परो मन्त्रो न मातुर्दैवतं परम् ॥७॥**

जल र पानी समानको दान, द्वादशी समानको तिथि, गायत्री समानको मन्त्र र मातासमानको देवता अरु कुनै छैन ।

### विष

**तक्षकस्य विषं दन्ते मक्षिकाया विषं शिरः ।**
**वृश्चिकस्य विषं पुच्छे सर्वाङ्गे दुर्जने विषम् ॥८॥**

तक्षक आदि सर्पको दाँतमा विष हुन्छ । माहुरीको टाउकामा विष हुन्छ । बिच्छीको पुच्छरमा विष हुन्छ । तर दुर्जनको सबै अङ्गमा विष हुन्छ ।

### पतिलाई लत्याएर व्रत नबस्नू

**पत्युराज्ञां विना नारी ह्युपोष्य व्रतचारिणी ।**
**आयुष्यं हरते भर्तुः सा नारी नरकं व्रजेत् ॥९॥**

पतिको अनुमति बिना उपवास र व्रत बस्ने स्त्रीले पतिकै आयु घटाउँदछे र अन्तमा नरकमा पर्दछे ।



### पतिको सेवा

**न दानैः शुध्यते नारी नोपवासशतैरपि ।**
**न तीर्थसेवया तद्वद्भर्तुः पादोदकैर्यथा ॥१०॥**

दानले, सैयौं व्रतले र तीर्थ घुमेर पनि नारी त्यति शुद्ध हुँदिन जति पतिको चरणपूजा गर्दा उ शुद्ध हुन्छे ।

### दूषित पानी

**पाद्यशेषं पीतशेषं सन्ध्याशेषं तथैव च ।**
**श्वानमूत्रसमं तोयं पीत्वा चान्द्रायणं चरेत् ॥११॥**

गोडा धोएर बाँकी बचेको पानी र साँझमा बचेको पानी कुकुरको मूत्र समान हुन्छ, यस्तो पानी पिइए चान्द्रायण व्रत बस्नु पर्दछ ।

### सुहाउने कुरा

**दानेन पाणिर्न तु कङ्कणेन स्नानेन शुद्धिर्न तु चन्दनेन ।**
**मानेन तृप्तिर्न तु भोजनेन ज्ञानेन मुक्तिर्न तु मण्डनेन ॥१२॥**

हात बाला लगाएर होइन दानले शोभायमान हुन्छ । शरीर चन्दन आदि सुगन्ध दलेर नभई सुहाउनाले शुद्ध हुन्छ । चौरासी व्यञ्जन खाएर होइन कि सम्मानले सन्तुष्टि प्राप्त हुन्छ । जटा, तिलक आदि बाहिरी भेषभूषाले होइन कि ज्ञानले मोक्ष प्राप्त हुन्छ ।

### लक्ष्मी नाश हुने कुरा

**नापितस्य गृहे क्षौरं पाषाणे गन्धलेपनम् ।**
**आत्मरूपं जले पश्यञ्छक्रस्यापि श्रियं हरेत् ॥१३॥**

नाइका घरमा गएर कपाल आदि काट्ने, चनौटोबाट सोभै भिकेर चन्दन लगाउने र पानीमा आफ्नो रूप हेर्ने व्यक्ति चाहे इन्द्र नै किन नहोस् उसको श्रीसम्पत्ति नाश हुन्छ ।

### अन्य नाश पार्ने कुरा

**सद्यः प्रज्ञाहरा तुण्डी सद्यः प्रज्ञाकरी वचा ।**
**सद्यः शक्तिहरा नारी सद्यः शक्तिकरं पयः ॥१४॥**

गोलकाँक्रीले तुरुन्त बुद्धिनाश गर्दछ । बोभ्होले तुरुन्त बुद्धि दिन्छ । नारीले तुरुन्त शक्ति नाश गर्दछे । दूधले तुरुन्त शक्ति दिन्छ ।

### पृथ्वी नै स्वर्गसमान हुने कुरा

**यदि रामा यदि च रमा यदि तनयो विनयगुणोपेतः ।**
**तनये तनयोत्पत्तिः सुरवरनगरे किमाधिक्यम् ॥१५॥**

असल पत्नी छिन्, धनसम्पत्ति छ, असल स्वभावको छोरो छ, नाती पनि जन्मेको छ भने यसभन्दा बढी देवलोकमा नै के पो छ र ?

### परोपकार

**परोपकरणं येषां जागर्ति हृदये सताम् ।**
**नश्यन्ति विपदस्तेषां सम्पदः स्युः पदे पदे ॥१६॥**

जुन सज्जनका मनमा परोपकारी भावना जागिरहन्छ उसका सबै सङ्कट नाश हुन्छन् र पाइला पाइलामा सम्पत्ति प्राप्त हुन्छ ।

### मानिस र पशुमा फरक

**आहारनिद्राभयमैथुनानि सामान्यमेतत्पशुभिर्नराणाम् ।**
**ज्ञानं नराणामधिको विशेषो ज्ञानेन हीनाः पशुभिः समानाः ॥१७॥**

खानपिन, निद्रा, डर र सहवास भन्ने कुरा मानिस र पशुमा समान किसिमले हुन्छ । मानिसमा बढी हुने कुरा भनेको ज्ञान मात्र हो । यसैले ज्ञान नभएको मानिस पशुसरह हुन्छ ।

### गुणको कदर

**दानार्थिनो मधुकरा यदि कर्णतालैर्दूरीकृताः करिवरेण मदान्धबुद्ध्या ।**
**तस्यैव गण्डयुगमण्डनहानिरेषाभृङ्गाः पुनर्विकचपद्मवने वसन्ति ॥१८॥**

आफ्ना गण्डस्थलमा मद खानआएका भ्रमरालाई मदान्धतामा हात्तीले कान हल्लाएर भगाउँदा उसैको गण्डस्थल शोभाहीन हुन पुग्दछ । ती भमरा त्यहाँ बस्न नपाए कमलको बनमा गएर पुनः बस्दछन् । (गुणीको गुणको कतै न कतै कुनै दिन न कुनै दिन अवश्य सम्मान हुन्छ) ।

### अर्काको दुःख नजान्नेहरू

**राजा वेश्या यमश्चाग्निस्तस्करो बालयाचकौ ।**
**परदुःखं न जानन्ति अष्टमो ग्रामकण्टकः ॥१९॥**

राजा, वेश्या, यमराज, आगो, चोर, बालक, माग्ने र चुगलिखोर : यी आठले अर्काको दुःखका बारेमा जान्दैनन् ।

### जवानी

**अधः पश्यसि किं बाले पतितं तव किं भुवि ।**
**रे रे मूर्ख न जानासि गतं तारुण्यमौक्तिकम् ॥२०॥**

तल भुइँमा के हेरिरहेकी नानी ? (कुनै युवकले सोधेछ) । हे मूर्ख ! त्यति पनि जान्दैनस्, मेरो जवानरूपी मोती खस्यो (बूढीले जवाफ दिइन्) ।

**एउटै गुण पनि महत्वपूर्ण हुन्छ ।**

**व्यालाश्रयापि विकलापि सकण्टकापि**
**वक्रापि पङ्किलभवापि दुरासदापि ।**
**गन्धेन बन्धुरसि केतकि सर्वजन्ता-**
**रेको गुणः खलु निहन्ति समस्तदोषान् ॥२१॥**

हे केतकी ! हुन त तिमी सर्पहरूका वासस्थान हौ, अधुरो छयौ, तिमीमा काँडा पनि छन्, बाङ्गोटिङ्गो पनि छयौ, हिलोमा उम्रन्छयौ, तिमीलाई खोज्न पनि मुश्किल हुन्छ तर तिमीसँग भएको एउटा मात्र गुण बास्नाले गर्दा सबै प्राणीको मित्र बन्दछयौ । हो रहेछ निश्चय नै एउटै गुणले पनि दोषहरू नाश हुँदा रहेछन् ।

**॥ इति सप्तदशोऽध्यायः ॥**

॥ सत्रौं अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ॥



**॥ इति चाणक्यनीतिदर्पणः ॥**

॥ नेपालको बागमती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला,अनैकोट गा.वि.स., वडा नं. ३ चारघरटोलमा जन्म भई सोही अञ्चलको काठमाडौं जिल्ला, गोकर्णेश्वर नगरपालिका वडा नं.७ मा बसोवास गर्ने मोहन प्रसाद सापकोटाबाट गरिएको चाणक्यनीति दर्पणको नेपाली भावानुवाद पूर्ण भयो ॥

॥ सबैको सदा कल्याण होस् ॥

धर्मार्थकाममोक्षेषु यस्य कोऽपि न विद्यते ।
अजागलस्तनस्येव तस्य जन्म निरर्थकम् ॥ज्ञण॥

दह्यमानाः सुतीव्रे०ा नीचाः परयशोष्ग्निना ।
अशक्तास्तत्पदं गन्तुं ततो निन्दां प्रकुर्वते ॥ज्ञज्ञ॥

बन्धाय विषयासङ्गं मुक्त्यै निर्विषयं मनः ।
मन एव मनुष्या०ाां कार०ां बन्धमोक्षयोः ॥ज्ञद्द॥

देहाभिमानगलिते ज्ञानेन परमात्मनः ।
यत्र यत्र मनो याति तत्र तत्र समाधयः ॥ज्ञघ॥



ईप्सितं मनसः सर्वं कस्य सम्पद्यते सुखम् ।
दैवायत्तं यतः सर्वं तस्मात संतोषमाश्रयेत् ॥ज्ञद्ध॥

यथा धेनुसहस्त्रेषु वत्सो गच्५ति मातरम् ।
तथा यच्च कृतं कर्म कर्तारमनुगच्५ाति ॥ज्ञछ॥

अनवस्थितकार्यस्य न जने न वने सुखम् ।
जनो दहति संसर्गाद्वनं संगविवर्जनात् ॥ज्ञट॥

यत् खनित्वा खनित्रे०ा भुतले वारि विन्दति ।
तथा गुरुगतां विद्या शुश्रुषुरधिगच्५ति ॥ज्ञठ॥

कर्मायत्तं फलं पुंसां बुध्दिः कर्मानुसारि०ाी ।

तथाष्वपि सुधियश्चार्यो सुविचार्यैव कुर्वते ॥झड॥

एकाक्षरप्रदातारं यो गुरुं नाष्वभिवन्दते ।
श्वानयोनिशतं भुक्त्वा चांटालेष्वभिजायते ॥झढ॥

युगान्ते प्रचलेन्मेरुः कल्पान्ते सप्त सागराः ।
साधवः प्रतिपन्नार्थान्न चलन्ति कदाचन ॥ढ्ण॥

पृथिव्यां त्रीिा रत्नानि अन्नमापः सुभाषितम् ।
मूऐः पाषा०ख०८ककषु रत्नसंख्या विधीयते ॥ढ्झ॥